# हस्तमाला

## Collection of Keshari Amgain

( गोरखा बाङ्मयको इतिहास अध्ययन हेतु सङ्कलित सामग्री )

स्मृतिग्रन्थ खण्ड

केशरी अम्गाई
बारपाक सुलिकोट–७, देउराली, गोरखा।

**Publication Detail :**

Cover : 4 Color with Lamination
Paper : Cover paper - 250 mg art paper.
Inner paper - 80 grams map litho.
Size : 18 x 24.5 c.m.

amgaikeshari@gmail.com

स्व. हस्तकुमारी धितालको
प्रथम वार्षिक पुण्यतिथिमा प्रकाशित




हस्तेश्वरी ट्रस्ट
काठमाडौं

२०६७





# मेरो भनाइ



**ईन्द्रकुमारी भट्ट**

म आमाको सम्झनामा केही कुरा पनि भन्न चाहन्न । २००४ सालदेखि २०६६ सालसम्म ६२ वर्ष म आमाको नजिक रहें । आमाको नराम्रो कुरा मेरो लागि केही थिएन । मेरो आमा अत्यन्त सहनशील हुनुहुन्थ्यो । आमा रिसाएको मलाई थाहा छैन । ०६६ सालको तिहारमा ठूलो मामा आउनुभएन ठूलो मामाको छोरा शम्भु र सानो मामाको छोरा देवी टीका लगाउन आएका थिए । हामी सबै उपल्लो तलामा थियौं आमा सुतिरहनुभएको थियो । भाइहरू अलि ढिला आएकोमा आमा नबोली सुतिरहनुभएको थियो । जव भाइहरू आएको आमाले थाहा पाउनु भएको थियो । आमा आफैं हाँस्दै उपल्लो तलामा आइपुग्नुभयो । आमाको त्यो हाँसो हामी सबैका निम्ति अविस्मरणीय छ । माथि टीका लगाउने ठाउँमा कान्छो भाइ शारदाले हाम्रो माझमा एउटा प्रस्ताव ल्यायो आज भाइटीकाको दिन हाम्रो ८७ वर्षे बुबा आमाको उपस्थितिमा एउटा सामाजिक काम गर्ने ट्रष्ट खोलौं, यसले हाम्रो परिवारलाई जो जहाँ भए पनि एउटै मालामा उन्नेछ । यसले समाजको लागि केही गर्न सक्यो भने हाम्रो प्रयास सफल हुन्छ । यो विचार मलाई पनि मन पऱ्यो । कान्छी बहिनी जापान थिई । ठूलो भाइ अमेरिकामा थियो, सबैलाई खबर गऱ्यौं । मेरो अध्यक्षतामा भाइहरू मिलेर हस्तेश्वरी ट्रष्ट खोलें । यो मेरो आमा र मेरो बुवाको नाममा खोलेका हौं । म जेठी छोरी भएर होला, भाइहरूले मलाई अध्यक्ष बनाएका । म मेरो सम्पूर्ण भाइबहिनीहरू र छोरा छोरीहरूलाई के भन्न चाहन्छु भने यो ट्रष्टलाई तिमीहरू सबैजना भएर पुस्तौनी बचाइराख्नू, तिमीहरू जो जहाँ भए पनि यो ट्रष्टलाई आफ्नो आदर्श सोची आफ्नो ठाउँबाट मद्दत गर्नू ।

यो वर्ष आमाको नाममा वार्षिक तिथिमा एउटा शोक पुस्तिका निस्कन लागेको छ यसको निम्ति म सम्पूर्ण छोराछोरी भाइबहिनी बुहारी र ज्वाई मामा माइजु मेरा सम्पूर्ण नातेदारहरूलाई नसम्झी रहन सक्दिन ।

आमाको नाममा हस्तकुमारी आँखा शिविर घ्याम्पेसालमा सञ्चालन गर्ने कुराले मलाई अत्यन्तै हर्षित बनाएको छ । यो ट्रस्ट सामाजिक कामका लागि नमूना बन्ने छ ।

अन्तमा, म मेरा सम्पूर्ण भाइबहिनी, बुहारी, छोराछोरी, ज्वाई तथा इष्टमित्रहरूमा हस्तेश्वरी ट्रस्टको नाममा सामाजिक सहयोग गर्न अग्रसर हुन आग्रह गर्दछु । म मेरी आमाको आत्माको चिर शान्तिको कामना गर्दै हस्तमालाको प्रकाशनको पुर्ण सफलताको कामना गर्दै यस कार्यमा प्रत्यक्ष वा परोक्ष रूपमा सहयोग गर्नु हुने सबै प्रति आभारी छु ।



धन्यवाद ।



# आठ दशकको सहयात्रा



ईश्वरीप्रसाद धिताल

छोरा, छोरी, नाति, नातिना मिलेर उनीहरूको आमा, हजुरआमबारे श्रद्धाञ्जली पुस्तिका निकाल्ने भएछन् । तपाईले पनि केही भन्दिनु भनेर भनेका छन् । तर मैले कसरी भन्नु, के भन्नु आफैं अलमलमा परेको छु ।

झन्डै आठ दशकसँगै बिताएकी मेरी जहान अहिले मसँग छैनन् । बिहान, बेलुका त सबैजना मसँगै हुन्छन् । दिउँसो सबैजना आ-आफ्नो काममा गएपछि घर कुर्ने म र बुहारी न हुन्छौं । बुहारीलाई पनि आफ्नो भान्साको काम र करेसाबारीको कामले फुर्सद पनि हुन्न नि ।

बाहिर घाममा होस् वा भित्र कोठामा एक्लै बसिरहेको हुन्छु । त्यस बेला आँखा नदेखे पनि छ्रामछ्राम र छुमछुम गर्दै मेरो छेउमा बस्ने मेरी जहान अहिले मेरो छेउमा छैनन् । उनले मलगायत हाम्रो सबै परिवारलाई छाडेर गएको पनि एक वर्ष भइसकेको छ ।

जीवनकालभर हरदम मेरो साथ दिने मेरी जहान अहिले माथिबाट मलाई हेर्दै होलिन् । आफ्ना सन्तान र सबैको राम्रो होस् भनेर कामना गर्दै छिन कि ? म यहाँ सबैजनाको बीचमा छु, उनी भने हामी सबैलाई छाडेर अर्कै संसारमा गइन् । सँगै बस्यौ भनेर सँगै जान पाइन्छ भन्ने पनि त छैन नि, कोही ढिलो तथा कोही चाँडो त अवश्य जानै पर्छ ।

हामीले करिब आठ दशकसँगै बितायौं । छोराहरूलाई त ठीकै छ नातिनातिना हामीले बिहेपछि बिताएको उमेर सुनेर अचम्म मान्छन् । 'अब हाम्रो जोडी कसरी यति लामो समय सँगै बस्न पाउला र हजुरबा' भन्छन् । हुन पनि अब त्यो सम्भव नै कसरी पो छ र ! उनीहरू २०/२५ वर्ष हुँदा पनि बिहेको कुनै सुरसार नै छैन नि ।

१९८० सालको फागुन मसान्तमा तान्द्राङ काउलेमा लक्ष्मीदास र वल्लभाको साइलो छोराका रूपमा जन्मेको म, १९८१ साल वैशाखका पाँच खुवादेउरालीमा भानुभक्त र माया अम्माईको जेठी छोरीका रूपमा जन्मेकी उनी । जीवनभर सुख, दुःखसँगै काट्नका लागि भाग्यले पहिले नै जुराएको थियो होला । साल फरक भए पनि हाम्रोबीचमा दुई महिनामात्र फरक छ ।

त्यसबेलाको चलन, बिहे चाँडै नै हुन्थ्यो । छोरीलाई सात, आठ वर्ष भइसक्दा बिहे गरिदिनुपर्छ भन्ने चलन थियो । १९८७ साल फागुनमा हाम्रो बिहे भएको हो । म सात वर्ष लागेको थिएँ तर गते याद छैन । सानो सात वर्षको उमेरको बच्चालाई त्यति याद हुने कुरा पनि त भएन नि । अहिले फेरि बुढ्यौलीले पनि छोयो ।

बिहेको धेरै कुरा याद छैन मलाई । बिहेमा जामा लगाइदिनुभएको थियो । जन्तीमा को-को हुनुहुन्थ्यो मलाई राम्रोसँग याद छैन । आजकाल बिहे अघि नै दुलहा, दुलही भेट्ने र कुरा गर्ने चलन छ । हाम्रो पालोमा कहाँ त्यस्तो हुनु । परिवारको कुरा मिल्यो, कुरा छिनियो बस ! बिहे गर्दा दुलहीलाई सँगै ल्यायौं पछि दुल्हन फर्काउन जाँदा माइतमा छाडेर आएको हुँ । पछि १२, १३ वर्षको भएपछि मात्र सधैं घरमा







बस्ने गरेर ल्याएको हो । त्यसबेलाको चलन नै त्यस्तै थियो । फेरि ससुराली घर देउरालीमा धेरै मान्छे पनि त थिएनन् । काउलेमा हाम्रो परिवार ठूलो थियो तर ससुरालीको परिवारमा अरू सदस्य जन्मिसकेका पनि त थिएनन् ।

बिहेमा दुलहीभन्दा दुलहा अग्लो भनेर जिस्काएको याद छ । पुतली कमारी लोकन्तीका रूपमा गएकी थिई । राणा चन्द्रशम्शेरले कमरा कमारी उन्मूलन गरे पनि पहिलेदेखि काम गरिरहेकाहरूले हाम्रो घर छाडेका थिएनन् ।

दुल्हन फर्काउन जाँदा सासूले धोती फेराएर खाना खान लैजानुभएको याद छ । आजकाल नाति-नातिनाले



सोध्ने गर्छन् बिहेमा तपाईं र हजुरआमाको बीचमा बोलचाल भयो कि भएन भनेर । कहाँ अहिलेको जस्तो चलन हो र । घर बस्ने गरेर आएपछिमात्र बोलियो । हेराहेर हुन्थ्यो । उनको अनुहार देखेपछि लाज लाग्थ्यो । दसैंको बेला ससुराली जान्थें । उनी पनि घरमा आइसकेकी हुन्थिन्, देखादेख हुन्थ्यो, बोल्ने त धेरै परको कुरा ।



मेरोभन्दा अघि मेरा दुवै दाइको बिहे भइसकेको थियो । ठूल्दाइ नन्दलालको काप्राफेद जयनारायण भट्टकी छोरीसँग भने माइला दाइ भैरप्रसादको धादिङ चनौटे पद्मप्रसाद सिम्खडाकी छोरीसँग । ठूल्दाइको पहिलो बिहेबाट घर चलेन अर्को बिहे गर्नुभयो । माइला दाइले भने पछि उमेरमा नै हामीलाई छाडेर जानुभयो । भाइहरू काशीनाथ र टीकाराम साना थिए ।

मलाई १९९० को भूकम्प पनि याद छ । म तल बारीमा थिएँ । सारा पृथ्वी नै हल्लिएको जस्तो भएको थियो । मुखले जमिन छोएर घोप्टो परेर बस्नुपर्छ भने, त्यसरी नै बसियो । हाम्रो तिर भूकम्पले धेरै क्षति पुऱ्याएन । म जन्मेको साल बनाएको घरलाई असर पाऱ्यो । गाउँमा कसैको घर भत्किएन । काठमाडौंमा मात्र धेरै घर भत्किए भन्ने सुनिएको हो ।

म २०१० सालमा छुट्टिएको हुँ । त्यस सालको वैशाखमा ठूलो छोरो जन्मिएको थियो । मंसिरमा म छुट्टिएँ । त्यसभन्दा अघि २००४ सालमा मेरी जेठी छोरी इन्द्रकुमारीको जन्म भएको थियो । म २४ वर्षको हुँदा उनको जन्म भएको हो । त्यसबेला २४ वर्षसम्म बच्चा नहुनु भनेको चर्चाको विषय बन्थ्यो । घरमा कसैले केही नभने पनि बाहिरकाले तेरो घरबार हुन अर्को बिहे गर्नुपर्छ भनी प्रस्ताव राखेका हुन्थे । तर मलाई कहिल्यै दोस्रो बिहे गर्न मन लागेन । जहानलाई किन सौता थप्नु भन्ने लाग्यो । श्रीमती भनेको एउटै हुनुपर्छ भन्ने मलाई लागेको थियो ।

जेठी छोरी जन्मँदा रमाइलो लाग्यो । अब अरू सन्तान पनि हुन्छन् भन्ने लाग्यो । मैले ढिलो सन्तान जन्मे भनेर अर्को गुँड पनि थपेको भए पक्कै पनि म यति खुसी र सुखी हुन सक्दिनथें होला ।

पहिली छोरी जन्मेको तीन वर्षपछि अर्को छोरी टंकु २००७ सालमा जन्मिन् । उनले कलिलै उमेरमा हामीलाई छाडेर गइन् । २०१० मा जेठो होमनाथपछि २०१३ मा माइलो जीवनाथ र २०१६ मा कान्छो शारदा जन्मिए । त्यसको तीन वर्षपछि कान्छी टुमा जन्मिई । सुरूमा ढिलो बच्चा भयो भनेर पीर गरे पनि पछि मेरो जीवनरूपी बगैंचा हरियाली र भरिपूर्ण भयो ।






जेठो छोरा जन्मेको केही समयपछि नै छुट्टिँदा केही गाह्रो भए पनि आँट गरेपछि पुग्छ भन्ने लाग्यो। मैले छुटिन्छु भनेर बासँग अंश मागेको पनि होइन। त्यसबेला पनि मलाई मेरी जहानले धेरै साथ दिइन्। उनको साथले त मैले थप आँट गर्न सकें।

हामीले हाम्री जेठी छोरीको बिहे २०१५ सालमा गऱ्यौं। त्यसबेला तान्द्राङ र वरिपरिको क्षेत्रमा मात्र होइन, जिल्लामा नै चर्चित कुविन्डेका भल्लव भट्टले आफ्नो नातिका लागि मेरी छोरी माग्न आउनुभएको थियो। उहाँ र मेरो बाबीच कुरा भएपछि बिहेको कुरा छिनियो। सम्धी कुलप्रसाद र मबीच भन्दा पनि बुढा सम्धीबीच कुरा निश्चित भएको थियो।

ज्वाइँ यदु १४, १५ वर्षको किशोर हुनुहुन्थ्यो। छोरी पनि सानै थिई। तर त्यति ठूलो बिहे सायदै भएको थियो र छैन होला अहिलेसम्म पनि। करिब १ हजार ७ सय जन्ती आएका थिए। त्यसबेला दाइजोको चलन धेरै थिएन। जन्ती खुवाउन सक्छ कि सक्दैन भन्ने मात्र हुन्थ्यो। करिब १२, १५ मुरी चामल पकाइयो होला। जिल्लाका सबै गन्यमान्य र प्रतिष्ठित मान्छे त्यस बिहेमा सामेल भएका थिए।

दुलहालाई पहिले नै चिनेको थिएँ। वल्लो र पल्लो गाउँ न हो। नजिक भएकाले ज्वाइँ बस्ने गरेर धेरै आउनु हुँदैनथ्यो। फर्किहाल्नु हुन्थ्यो।

पछि २०१९ सालमा जेठो र माइलो छोराको एकैदिन बिहे गरें। जेठोको छापथोकमा चन्द्रकुमारी तथा माइलोको डाँडापारि मधुरमासँग बिहे भयो। बुहारीहरू घरमा आएपछि अलिक सजिलो भयो।

मेरी जहानले कहिल्यै मलाई बचन फर्काएको याद छैन। मेरा कुरा कहिल्यै काटिनन्। बरू एक्लै बसेर रूने गर्थिन्। उनीसँग झगडा भएको मलाई याद छैन। म पनि झगडा गर्दिनथें। बेहोरा नभएको स्वास्नी मान्छेलाई पो हप्काउँछन् त। उनलाई कसरी हप्काउनु।

मैले केही समय जुवा पनि खेलें। त्यसबेलाको संगत पनि त त्यस्तै थियो। सम्पत्ति भने सकिनँ। मैले सम्पत्ति सके मेरा सन्तान पछि अरूको हली लाग्छन् भन्ने सम्झिएँ। बल्लवका भाइ साइला काशीनाथले सम्झाउनुभएको याद छ मलाई। उहाँको बचनले मलाई जुवा छोड्न प्रेरित गऱ्यो। पछि उहाँको जीवनकालपछि मेरो बुढा सम्धी पनि बन्नुभयो। उहाँकी नातिनी राधिकालाई कान्छो छोराले बिहे गऱ्यो २०३५ सालमा।

हामी बुढा र बुढीले दुःख गरेर छोरालाई पढायौं। जेठी छोरीको बिहे चाँडै नै भयो। कान्छी छोरीलाई पढाएको भए सकिन्थ्यो। त्यतातिर त्यति वास्ता गरिएन। कान्छीको बिहे पनि खोप्लाङ मोदराज वस्तीको माइला छोरा भरतसँग २०३४ सालमा भयो। मोदराज पनि पश्चिमको चर्चित व्यक्ति हुनुहुन्थ्यो।

अहिले जेठी छोरीकै चारवटा नाति भएका छन्। म जिजुहजुरवा भएको छु। जम्माजम्मी १७ नातिनातिना र चार पनाती भएका छन् हाम्रा।

गाउँमा अरूले छोरालाई घरमा नै राखेर काममा लगाइराखेका हुन्थे। तर हामी भने आफूले दुःख गरेर भए पनि उनीहरूलाई पढाउने काममा लागिराख्यौं। हामीले काम गरेको देखेर अरूले खिसी गर्थे तर त्यसबेला दुःख गरे पनि अहिले सन्तोष पाएका छौं। गोरखासम्म चामल बोकेर पुऱ्याउनु पर्थ्यो। छोराहरूले पनि त्यो दुःख अहिलेसम्म बिर्सेका छैनन्। छोरा, छोरी र उनीहरूको सन्तानले अहिले प्रगति गरिराखेका छन्। त्यसमा नै खुसी छु। म राजनीतिमा पनि सामेल भएँ। त्यसबेला पनि बुढीले धेरै साथ दिइन्। घरमा आउने पाहुनालाई खाना खुवाउन उनले कहिल्यै झर्कोफर्को गरिनन्। उनले आफ्नो जीवनकालमा कसैसँग नमीठो बचन बोलेको मलाई याद छैन। उनको कोमल स्वभावको सबैले प्रशंसा गरेको सुन्थें। फलानाकी श्रीमती भनेर उनको राम्री कुरामात्र सुन्थें।

२०५० सालपछि उनको एउटा आँखामा समस्या देखियो। तर पनि उनको जाँगर र क्रियाशीलतामा कुनै कमी आएन। २०६२/६३ सालपछि उनको दुवै आँखा बन्द भए तर पनि उनी अरू कसैलाई आफ्नो कारणले समस्या नपरोस् भन्नेमा चिन्तित थिइन्।









त्यस अवस्थामा पनि उनलाई मेरो र परिवारको नै सम्झना भइराख्थ्यो ।

बिरामी परेका बेला आफ्नोभन्दा मेरैबारे धेरै कुरा गरेको छोरा, नातिले बताउँथे । अघिल्लो साल मंसिरको सुरूमा उनी अलिक बिरामी परिन् । पहिलो दिन त आस मारेका थियौं । पछि बानेश्वर तिरको अस्पतालमा लगे । भर्ना गर्ने दिनसँगै गएका थियौं । म सिनामंगल नै फर्के । उनलाई अस्पतालमा नै राखियो । त्यसको दुई, तीन दिनपछि होला मंसिर १२ गते उनले भेट्न खोजेकी छन् भन्ने खबर आयो । त्यस दिन अस्पताल गएँ । उनले आफ्नो निधारभरि सिन्दुर लगाइदिन आग्रह गरिन् । उनको मनले अब हरेस खाएको भान भयो । आँखाभरि आँसु पार्दै मैले ८० वर्षपछि फेरि उनको सिउँदो सिन्दुरले भरिदिएँ । उपस्थित छोरा, छोरी, नाति नातिना, बुहारीको आँखा पनि आँसुले भरिए । त्यसको दुई दिनपछि उनले छाडेर गइन् भन्ने खबर आयो । म पशुपति जान पनि सकिनँ । अब एक्लो भएको महसुस गर्दै सिनामंगल घरमा बसिरहें । सात जुनीसँगै काट्ने भनेर लगनगाँठो कसेकी मेरी जहानले यस जुनीमा छाडे पनि छ जुनी त अझै बाँकी छन् नि ! ❁

*(नाति शरदसँगको कुराकानीमा आधारित)*









# सासूआमालाई श्रद्धाञ्जली

नारी सहनशीलताको अर्थ निमुखो नठान्ने, अनुशासनशीलतालाई कमजोरी नमान्ने, अरूको आदर सत्कारलाई चाकडी नसोच्ने, लज्जालु स्वभाव, मन्द मुस्कान भएकी, पारिवारिक एकमना होइन, एकतामा विश्वास गर्ने, कम बोल्ने, माया अरूले आफूलाई दिने चिज होइन, आफूले अरूबाट जगाएर लिने चिज होइन, बरू आफूले अरूबाट जगाएर लिने भावनात्मक वस्तु हो, जो अरूको हृदयबाट वर्षन्छ भन्ने व्यावहारिक ज्ञान भएकी, मुदुभाषी, कुलीन सच्चा पतिव्रता नारी मेरा सासूआमाको प्रथम वार्षिकीमा उहाँको आदर्शको हृदयले नै कदर गर्दै मृतात्माको चीरशान्तिको कामना गर्दै हार्दिक श्रद्धाञ्जली अपर्ण गर्दछु।



**यदु भट्ट**
काठमाडौ









# मातृ वियोग

होमनाथ धिताल

पन्ध्र दिनअघि आमा-छोराको फोनमा कुरा भएपछि
भेट गर्ने इच्छा राखी
ट्राभल डकुमेन्ट भरेंथे
आमाको आशीर्वाद लिने गरी
समुद्रपारिबाट चिच्याएर कराएको थिएँ
पर्खनुहोस् आमा म परदेशबाट छिट्टै आउँदैछु भनेर
बुवा, दिदी, भाइहरू र परिवारसँग फोन भइरहन्थ्यो
जवाफ आउँथ्यो, आमा रसिलो हुनुहुन्छ
अनुहार भरभराउँदो छ भनेर ।
पीर, चिन्ता नगर्नु तँसँग भेट हुन्छ
तँलाई सम्झिरहनु भएको छ
हप्ता, दस दिनपछि श्रीमतीको फोन आयो
आमा अस्पतालमा हुनुहुन्छ भनेर ।
बिरामी सामान्य हो, निमोनिया भएको छ रे
दुई-तीन दिनपछि अस्पतालबाट घरै आउनुहुन्छ रे
आत्तिनु होला भनेर फोन गरेकी
भाइ-भाञ्जाले फोन गर्नुहोला
फोनको प्रतीक्षामा रहें, फोन पाइनँ
मन सलबलाई रह्यो,
आफैंले फोन गरें ।
बुवा बोल्नुभयो, बाबु आमालाई निमोनिया भएछ
दुई दिनपछि घरै आउँछे पीर नगर
म पनि अस्पतालमा जँचाउन गएको थिएँ
मेरो पनि सबै ठीक रहेछ ।
अर्को दिनको फोनमा भाइसँग कुरा भयो
बिरामी सामान्य भएर दाइलाई खबर नगरेको
पर्सि आमा घर आएपछि आमासँग फोन गराउँला
यस्तै यस्तै सुन्दै थिएँ

भोलिपल्ट अनायास रातको साढे तीन बजे
भाञ्जा शिशिरको फोनमा
मामा हजुरआमालाई बचाउन सकिएन
एकछिन पछि हामीहरू आर्यघाटतिर जादैछौं
बुवासँग कुरा गर्नुहोस्
भिनाजुले होमनाथ भनेको सुने
शब्द दोहोरिएन दुवैजना स्तब्ध
फोन लाइन काटियो
मातृ वियोग सुनेपछि
आमासँगका हरेक क्षणहरू क्रमिक रूपले
एकपछि अर्को गरी अनन्त आइरहे ।
त्यसैगरी आँखाबाट अविरल आँसु बगिरह्यो
अनि याद आयो सुख सिद्धिएछ भनेर ।
त्यो उज्यालो सुन्दर अनुहार
त्यो मीठो बोली
सानो चटक्क मिलेको शरीर
यता उता फत्याक फुरुक
उभिन्छ अगाडि प्रतिबिम्ब बनेर
अनि खोन्दछु आमालाई
कहिले भान्सामा चियाएर
कहिले सागबारीतिर
कहिले तलातिर हेर्न पुग्दछु
कहिले आँगन र खलामा
आमा कता कता

आमा भोक लाग्यो खाने कुरा के छ ?
आत्था आमा दुख्यो, भन्ने दिन गएछ ।
कसलाई सुनाउ, सुनाएर यो के भयो र





कति रुनु, रोएर पनि के गर्नु ?
आमा नै टाढा भएपछि
अब जति कराए पनि म बोल्ने भएपछि
दुःख सुख कि सहभागी आमा
अब, कता कता टुहुरो भएछु म त

कहिले एक्लै सन्नटामा चिच्याउँछु
आ.........मा भनेर
कसले यो सुन्दछ र आमा नै टाढा गएपछि
भेट गर्न मन गर्नु भएको थियो भन्नु केही थियो कि ?
ऋणी त म यसै नै थिए अझै ऋण दिनु पो थियो कि ?
के गरुँ ? अब म आमाले भेट नदिएपछि
६ वर्षको उमेरदेखि विवाह बन्धनमा परी
८१ वर्षसम्म श्रीमान्सँगै रही
छोरा, छोरी नाति, नातिना र पनातिको माझबाट
चुरा, पोते, सिन्दुरसहित
विवाहमा पाएको दोसल्ला ओढी
बोल्दा बोल्दै सबैसँग बिदा मागी स्वर्ग जानुभएछ ।

सायद म ढिलो भएर होला
आमाको शुभ मुहूर्तलाई भेटन सकिनँ मैले
आमा अब भेट कहिले ............?

सपना मात्र नभई मेरा विपना पनि अधुरा रहे
मैले कर्ममा हारेको रहेछु
मलाई क्षमा दिनुहोस् आमा
हजुरले आफ्नो कर्म पूरा गर्नुभएको रहेछ ।
सबैको माया पाउनुभएको छ
हामी सबै आर्शीवादका भोका छौं
हजुरलाई स्वर्गको द्वार खुला छ
मृत आत्माको चीरशान्ति पाउनेछ
हामीलाई विश्वास छ
हजुरको भौतिक स्वरूपको दर्शन नमिले पनि
हस्तमालासँग भेट हुने नै छ
पुनर्जन्मको विधान शाश्वत् भएमा
हजुरको सेवा गर्न पाऊ भन्दै
अनन्त प्यारमा दुई आँसुका थोपासहित बिदा हुन्छु ।











# आमाप्रति...



डा. जीवनाथ धिताल

आमाप्रति केही लेख्न खोज्दा कविताकी जननी कविसँग दाँज्न मन लाग्छ । कविजी कविता कोर्छन् तर च्यात्न सक्दैनन् आफ्नै कविताका पानाहरू किनकि उनको सम्पूर्ण मन:मस्तिष्क भिजेको छ कविताका शृगारमा । कविले कविताको सृष्टिमा मसी र कागजमात्र खर्चेनन् उनको महत्त्वपूर्ण समय र उनका जीवनका सम्पूर्ण बुझाइको निचोड मन्थन गरेर निकाले नौनीका रूपमा र बन्यो त्यो मुटुको धड्कन र त उनी च्यात्नै सक्दैनन् उनका कविताका पाना । उनले सम्झे उनको कविता हार हो, मणि हो, हीरा हो अनि अमूल्य रत्न हो जसको मूल्य नै छैन किनकि त्यसलाई उनेर बेच्न नै सक्दैनन् । त्यसैले त उनी कविताका जननी हुन्, ममतामयी आमा हुन् । आमाले आफूले जन्माएको बच्चाको मूल्य राख्न सक्दिनन् किनकि आमा कवि हुन अनि कवि आमा पनि हुन् ।

आफैंमा ममतामयी हो किनकि आमाले आफ्नो शिशुलाई नौ महिनासम्म गर्भमा सुरक्षित राख्छिन् र पूर्णाङ्गको बालकलाई धरतीमा उतार्छिन् अनि आफू बाँचुन्जेलसम्म उसकै नि:स्वार्थ सेवामा आफूलाई सदा समर्पित गर्छिन् । आमा र धरतीमा नि:स्वार्थ भाव झल्किन्छ, यी दुवै सृष्टिकर्तामा एकरूपता छ त्यसैले त आमा स्वयं नै धरतीकी प्रतिमूर्ति हुन् ।

प्रत्येक महिला आफू आमा बन्न लालायित हुन्छन् र आतुर पनि । तर जब आमा बन्न सक्दैनन् आफूलाई तुच्छता र हीनताको बोध गर्छन् अनि आमा बन्न नसक्दाको पीडाले उद्दण्डता पनि देखाउँछ । कविले कविता लेख्नै पर्छ अनि कवि बन्न सकिन्छ त्यसैले कवि र कविताको एकैपल्ट जन्म हुन्छ । त्यसैले बच्चा जन्माएपछि नै एकैपल्ट एकै दिन एकैक्षणमा बच्चा र आमाको पनि जन्म हुन्छ तर बाबुको जन्म बच्चासँगै पनि हुनसक्छ र बच्चाभन्दा धेरै पछि पनि हुनसक्छ । बच्चा र आमा एक-अर्काका पूरक हुन् । एउटाको अस्तित्वको अभावमा अर्काको अस्तित्व नै समाप्त हुन्छ पनि भनिन्छ । आमा र बच्चा नङ र मासु जस्तै एकाङ्ग हुन् जसलाई छुट्याउन कठिन छ ।

आमा र कविलाई दाँजेर हेर्दा कविजी कविता लेख्छन् अनि केर्छन्, थप्छन् थपघट गर्छन्, शब्द चयन गर्छन्, शुद्धाशुद्धि निहाल्छन् र सुन्दर कविता पस्किन्छन् र नै कविताका जननी गनिन्छन् फेरि आमा त्यस्तै बच्चा जन्माएर आमा ढुक्क बस्दिनन् । नवजात शिशुको खानपान, लवाइ, खवाइ र देखभाल मात्र होइन, उसलाई सिंगो मान्छे बनाउन सर्वाङ्गीण विकासको ठेकेदार पनि आमा नै हुन् । आफनो बच्चाको हुर्काइमा आउने अवरोध मेटाउन आफनै ज्यानको बाजी राख्न तयार हुने आमाहरू साँच्चै नि:स्वार्थ ममतामयी सेविका पनि हुन् । बच्चा हुर्काउँदाको क्रममा आमालाई आफ्नो

**आफ्नो बच्चाको हुर्काइमा आउने अवरोध मेटाउन आफनै ज्यानको बाजी राख्न तयार हुने आमाहरू साँच्चै नि:स्वार्थ ममतामयी सेविका पनि हुन्**









स्याहारको ख्याल हुन्न । जाडो हुन्न, गर्मी हुन्न, आमालाई थकाइ हुन्न अनि भोक र प्यास हुन्न यदि उनको बच्चा सन्तुष्ट छ भने । बच्चाको सामान्य पेट दुख्दा आमाको पेटमा असह्य वेदना हुन्छ, बच्चाको सामान्य टाउको दुखाइमा आमाको खप्पर फुट्ला जस्तो हुन्छ । अचम्म छ संसार, नजन्मँदाको अवस्थामा आमाको पेटमा टाँस्सिएर बसेको बच्चा आमा रुँदा रुन्थ्यो आमा हास्दा हास्थ्यो, आमाले खाँदा अघाउँथ्यो भने आमा बिरामी हुँदा थला पर्थ्यो । जब जन्मन्छ ठीक उल्टो छ, बच्चा रुँदा आमा रुन्छिन्, बच्चा हास्दा उनी हास्छिन्, बच्चाले खाँदा आफू नखाएरै सन्टुष्ट हुन्छिन् आमा अनि बच्चा बिरामी हुँदा उठ्नै नसक्ने गरी थला पर्छिन् ।

तलब, जागिर, ज्याला, पारितोषिक, भत्ता र पेन्सन उपदान केही चाहिन्न आमालाई, बच्चाको नि:स्वार्थ सेवा जीवनमा गरे पनि, मानौं उनको बच्चाको सन्तुष्टि नै उनको पूर्ण सन्तुष्टि हो । साँच्चै आमा बन्न कठिन छ तर बच्चा बन्न सहजता । आमाको मर्म बच्चालाई थाहा हुँदैन, आमाको पीडाले उसलाई छुँदैन किनकि आमाको जीवनभर ऊ आफू सदा बच्चा नै हुन्छ र ऊ आफू आमाको बच्चा बनेर सधैं बस्न चाहन्छ । आमाले आफ्नो बच्चाको खुसी र पीडाबोध गर्छिन् किनकि उनी मनोवैज्ञानिक हुन्, उनलाई थाहा छ कुन ठाउँमा छुँदा बच्चालाई दुख्छ भनेर । उनी बच्चाको सधैं हेरचाह गर्ने पहरेदार वा सुरक्षाकर्मी हुन् । शिक्षिका भनेर उत्रिन्छन् आमा मैदानमा आफ्नो बच्चालाई भाषा सिकाउन र तोते बोलीमै बच्चाले मातृभाषाको  पाठ पढ्छ, झोलुङ्गोमा हल्ली-हल्ली अनि भन्छ आमा भनेर ।

आमा रुँदा बच्चाको आँखा रसाउँदैनन् किनकि आमाको पीडा बोध गर्दैन उसले तर बच्चा रुँदा आमाको छाती चिरिन्छ, लाग्छ मानौं बच्चाको चोटभन्दा आमाको पीडा बढी छ । राले सिंगाने नराम्रो होस् वा अपाङ्ग होस् बच्चालाई छुट्याउँदैन आमाको मनले किनकि आमाको मन विशाल छ । बच्चासँग रिस, इर्षा, द्वेष केही छैन आमामा किनकि बच्चासँग केही लिनु छैन उनले बरु बच्चालाई जीवनभर दिएरै जानु छ । मालीलाई आफ्नो बगैंचाको फूल प्यारो भएझैं संसारका बच्चामध्ये आफ्नै बच्चा प्यारो छ आमालाई, आफैं जन्माउँछिन्, हुर्काउँछिन्, बढाउँछिन् सिंगार्छिन् फुलाउँछिन् साँच्चै आमा बगैंचाकी मालीकी प्रतिमूर्ति हुन् ।

यो संसार आमा र बच्चाको साझा थलो हो साँच्चै संसारमा आमा र बच्चाको आधा हिस्सा छ तर आमाको हिस्सामा सधैं बच्चाले दाबी गरिरहन्छ र पनि बच्चाको हिस्सामा आमाले दाबी गर्नु छैन । आमा आफ्नो हिस्सा पनि बच्चालाई नै सुम्पँदा रमाउँछिन् । धन्य, आमा, के पायौं त बच्चा पाएर तिमीले अनि केवल पायौं बच्चा, अनि आफनो सर्वस्व सुम्पियौं त्यही बच्चालाई अब भन बच्चाबाहेक तिमीले के पायौ त ? त्यसैले बच्चा भएर आमाको भाव बुझिन्न, आमालाई पढ्न सकिन्न, आमाको अर्थ लगाउन सकिन्न, आमा शब्दको व्याख्या गर्न सकिन्न, आमालाई चिन्न आमा भएरै जन्मनुपर्ने हुन्छ । तर आमा भएरै जन्मन किमार्थ सकिन्न यसमा द्विविधा नै छैन । त्यसैले मेरी आफ्नै जन्म दिने स्व. हस्तकुमारी धितालालाई म सम्झन मात्र सक्छु तर उहाँको माया, ममता, सहनशीलता क्षम्यता र मप्रतिको समर्पणको व्याख्या गर्न सक्दिनँ । २०६६ साल मंसिर १४ गते दिउँसो ठीक १२:१५ बजेको एउटा कहालीलाग्दो काल (समय) आयो र अस्पतालको शय्याबाट एक्कासि आमालाई टिपेर लग्यो र सदाका लागि बिछोड बनायो मबाट उसले । यसैले ममतामयी आमाको वार्षिकीमा सम्झनाका रुन्चे हरफहरू कोर्नुबाहेक ममा केही सामर्थ्य छैन । यसैले यो प्रथम वार्षिकीका दिन मेरो सम्झनाका केही क्षणहरूलाई कापीमा उतार्ने जमर्कोलाई आमाप्रति समर्पण गर्छु ।

कुरा म ३ वर्ष छँदाको रहेछ । गाउँकै उदयानन्द हजुरबुवा सिकिस्त बिरामी परी ओछ्यान परेछन् । सबै गाउँले बिरामी घरमा जमघट हुँदा मलाई मेरी ठूलीदिदीले बोकेर त्यतै लैजान लाग्दाको क्रममा होला आमाले दिदीलाई हप्काउनुभयो 'भाइलाई बिरामीको वरपर नलैजा,' अनि दिदीले मलाई काखमा बोकेर दौडेको









क्षण मैले थाहा पाउन सक्ने भएपछि अनुभूत गरेको मेरी आमाको सन्तानप्रतिको गहिरो माया र मेरा लागि मीठो सम्झना थियो ।

म नौ/दस वर्षको हुँदो हुँ । त्यतिबेला कक्षा ४ मा भर्ना भएको पढ्न भनेर, आमाले मेरो दाइ र मसमेत दुई भाइलाई मनकामना मन्दिरमा साथै लिएर आउँछु भनेर भाकल गर्नुभएको रहेछ । आमासँग मनकामना मन्दिर गएर गोरखा बजारको बाटो हुँदै फर्कंदा बाटोमा मेरो ठूलो भिनाजुले ल्याउनुभएको एकजोर चप्पल नयाँ मोडलको देखेर त्यस्तै चप्पल आमासँग किनी माग्ने विचार आयो । अनि आमासँग त्यस्तै चप्पल किनी दिन आग्रह गरें । मैले तर आमाले मेरो विचार बुझ्नुभएन । मैले जिद्दी गरिरहे । पसलेले एकज़ोर मात्र होइन, थुप्रै चप्पलका मोडल देखायो तर मैले भनेबमोजिमको एउटा मोडल देखियो जुन मेरो गोडामा नमिल्ने सानो आकारको थियो । त्यो करिब ४।५ वर्षको बच्चालाई हुने खालको मात्र देखिन्थ्यो । सानै भए पनि त्यही चप्पल किनी दिने आग्रह गरें तर आमा रिसाउनु भयो र सम्झाउनु भयो अब त बढ्ने मान्छे सानो चप्पल किनेर खुट्टा नै पस्दैन बरु अलि ठूलो आकारको किन्नुपर्छ । मैले सो चप्पलमा खुट्टा पसाएँ आधा मात्र गोडालाई समेट्यो त्यो चप्पलले । तर मैले भिनाजुको गोडामा सजिएको त्यस्तै चप्पल सम्झे र त्यही चप्पल सानो भए पनि किनिदिन आमासँग जिद्दी गरिरहे । आमाले त्यस्तै चप्पल अन्यत्र खोजेर किनिदिने बचन दिनुभयो । तर त्यो पसलबाट छुटेपछि घरमा आउँदासम्म दोस्रो पसल छैन भन्ने मलाई जानकारी थियो । आमाले नकिनी दिने विचार गर्नुभएको थाहा भयो । अनि पिरोल्न थालें र भने आमा 'केही' 'केही', आमा 'केही' 'केही,' मैले धेरैपटक आमालाई 'केही' 'केही' भनेर पिरोलिरहेको सुनेर मूर्च्छा परेर आमा हास्नुभयो अनि २ वटा छोडा किनेर हातमा थमाई दिनुभयो मलाई ठीकै लाग्यो छोडा गुलियो रहेछ पहिलोपटक छोडा खाएको स्वाद लिंदा म आमाको पछि-पछि घर फर्कें । त्यो दिन अब सम्झना मात्र भएको छ किनकि आमाले सदाका लागि छाडेर गइसक्नुभयो मलाई । आमा अलबिदा । ❁











# आमाको सम्झनामा...



शारदाप्रसाद धिताल

आमा ! २०६७ साल मंसिर १४ गते बेलुका आठ बजेर २५ मिनेट जाँदा हजुरको सम्झनामा अतीतका दिनहरूका बारेमा दुई शब्द कोर्न लागिरहेको छु। हजुरले हामीलाई टुहुरो पारेर छाडेर जानुभएको पनि एक वर्ष बितिसकेछ।

आमा ! म हजुरको कान्छो छोरा-३६ वर्षको उमेरमा जन्माउनु भयो। मैले तपाईंलाई आमा भनेर चिन्दा तपाईंका केश सेता थिए। तपाईंले मलाई कति माया गर्नुहुन्थ्यो त्यो लेख्न मसँग शब्दावली नै न पर्याप्त छ, न तौलन कुनै साधन नै छ, न नाप्नका निम्ति। तपाईंले हामीलाई गरेको माया कति गहिरो छ यो ब्रह्मान्ड जस्तै विशाल छ। म यसलाई शब्दमा उतार्न सक्दिनँ। ठीक आजको एक वर्ष पहिला तपाईंले हामीबाट बिदा लिनुभयो-पृथ्वीमा मेरा निम्ति सबभन्दा आदरणीय सबैभन्दा ममतामयी र सबैभन्दा ठूलो व्यक्तित्वको अन्त्य भयो। सायद यो धरतीमा तपाईंभन्दा ठूलो मान्छे मेरा लागि अर्को कोही थिएन र छैन पनि।

आमा ! हजुरले जन्माएका छजना सन्तानमध्ये माहिली दिदी टंकुलाई मैले देखिनँ। अरू पाँचजना हामी जीवितै छौं र मैले सबैले हजुरको सम्झना भक्ति र आमाप्रतिको प्रेमभाव गरेको देखेको छु। कसले कति तपाईंलाई माया गऱ्यो, त्यो नाप्ने यन्त्र हामीसँग छैन। ठूली दिदी इन्द्रकुमारी हजुर बितेपछि तपाईं सुत्नुभएको कोठामा पस्न मान्नुहुन्न। तपाईंका बारेमा कसैले कुरा उठाए उहाँ गहभरि आँसु पार्नुहुन्छ। ६ वटा सन्तानकी आमा ६३ वर्षकी बुढी दिदीलाई तपाईंले कस्तो प्रभाव पार्नुभएको रहेछ। दिदीलाई भेट्दा थाहा हुन्छ। ठूली भान्जी विमलाले अमेरिकाबाट मलाई खबर गरिन् ठूलो मामा फोनमा रोइसिन्थ्यो।

तपाईंको ठूलो छोरा पनि हाल त्यहीं हुनुहुन्छ। ठूलो छोरा होमनाथसँग हजुरको भेट भएन। लौ उसको राम्रो होस् भो नबोलाउ उसलाई-गहभरि आँसु पारेर तपाईंले हेम्स अस्पतालमा भन्नुभएको र दाइले फोनमा व्यक्त गर्नुभएको पीडाले तपाईंहरू बीचको सम्बन्धलाई म उतार्न सक्तिनँ। तपाईं बितेपछि अस्पतालको कोठामा सान्दाइ जीवनाथ रुनु भएको देख्दा साँच्चै मैले नरोई मन सम्हालेर बसेकामा आफैंप्रति उदासीन र खिन्नको महसुस गरेथें। कान्छी बहिनी त एक वर्षसम्म दूध, मासु नखाई चिन्तामा छिन्। आमा यो तपाईंले आफ्ना सन्तानलाई लगाउनुभएको गुन होला वा तपाईंले सबैलाई गरेको प्रेमको ज्योति देखिएको प्रकाशपुञ्ज हो।

आमा ! तपाईंका बारेमा लेख्न लाग्दा आँखा रसाएर आउँछन्, कुन कुरा लेख्नु। मैले थाहा पाउँदादेखि नै बालाई पकाएको खाना जुरीको भात दिनुहुन्थ्यो। बाले नखाई कहिल्यै खानुभएन, प्रत्येक दिन बिहान बाको गोडाको पानी नखाई तपाईंले केही खाएको मलाई थाहा छैन। बित्ने दिनसम्म पनि बाकै सम्झना गर्नुहुन्थ्यो। लौहै म त गइहाल्छु, याद गर है बालाई हिफाजत गर, तपाईंका ती शब्द कोठामा गुन्जी रहेकै छन्। आमा तपाईंभन्दा पतिभक्त स्त्री मैले कोही देखिनँ। तपाईंको सहनशीलता तपाईंको उदारभाव र तपाईंको हसिलो व्यवहारले सम्पूर्ण दु:ख लुक्थे। आफूलाई जस्तो पीर दु:ख परे पनि नदेखाउने र सधैं हाँसिरहने तपाईंको स्वभाव आमा साँच्चै स्तुत्य छ।

आमा ! म ३ वर्षको हुँदा दुवै दाइको विवाह भइसकेकाले घरमा बा-आमा, दुइ दाइ, दुई भाउजूसँग बहिनी आठजनाको परिवारमा मैले आमाको स्नेह पाएँ। ठूली दिदी बिहे भए पनि नजिकै हुनुहुन्थ्यो। आमा









घाँसदाउरा, पानीपँधेरो, ढिकी, जाँतो वनपात तपाईंले गर्नुभएको परिश्रम र हामीलाई पढाउँदा उठाउनुभएको साहस जीवन मेरो चलचित्रझैं घुमिरहन्छन् । मामाघर देउरालीबाट हामीलाई मिलेको सहयोग आमै-हजुरबुवाले गर्नुभएको माया, तपाईं र माइतीको सम्बन्ध अनुकरणीय थियो ।

आमा ! मेरो विवाह १९ वर्षमा होस् भन्ने चाहनुहुन्थ्यो । तर फागुनमा नभई असारमा भयो- ज्योतिषले १९ वर्षमा भए उत्तम हुन्छ भनेको २० वर्षमा हुँदा राधिका बिरामी परिरहँदा तपाईं आत्तिनु हुन्थ्यो । राधिकालाई तपाईंले गर्नुभएको माया र उसले तपाईंलाई गरेको सेवा देख्दा मैले सासू, बुहारीबीच फुट सम्बन्ध हुन्छ भन्नेहरूको भनाइ गलत मान्दथें ।

आमा ! हामी पाँचै जनाका सन्तान जन्मे तर तपाईंले सबैलाई माया दिएर हुर्काउनुभयो- न झर्कनुभयो, न कसैलाई हप्काउनुभयो, न कठोर शब्द बोल्नुभयो, कसैसँग झगडा नगरी सबैलाई आफ्नो व्यवहारले नियन्त्रणमा लिनुहुन्थ्यो । २०४४-४५ सालतिर म काठमाडौंमा पढ्न बस्दा घर कम जान्थें, मेरो सानो छोरा सिद्वार्थ र दाइको सानो छोरा शीतललाई ६ महिनापछि खाटमा सुताई मलाई हाँसेर प्रश्न गर्नुभएको थियो । लौ आफ्नो छोरा चिन त ? आमा ती दिन आज कसरी सम्झूँ । सबै छोराछोरीहरूको बिहे गरिसकेपछि पुत्रदण्ड तारें अब तीर्थ जान्छु भनी बद्री, केदार, गया, बनारस, मथुरा, विन्द्रावनलगायत भरतका तीर्थस्थल जानुभयो । मैले आमाको साथ जाने सौभाग्य पाएँ । बद्रीमा पुगेपछि चिसो लागेर तिम्रो आमा यहीं मर्छिन् मुटु कठोर बनाउ भाग्यमानी रहन्छन् भनेको सुन्दा आमा तीर्थ यात्राको सम्झना आइरहन्छन् । सप्ताह पुराण लगाउनुभयो-चौरासी गर्नुभयो र आफ्नो सम्पूर्ण कर्तव्य पूरा गरी आमा हजुर काठमाडौं आउनुभयो । मैले तपाईंको सेवा गर्ने मौका पाएँ । ५ छोराछोरीमध्ये मैले आफूलाई बढी भाग्यमानी ठानें ।

आमा ! तपाईंले आँखा नदेख्दा बुहारी राधिकाले तपाईंलाई गरेको सेवाले मैले यस्ती श्रीमती पाएकामा आफूलाई भाग्यमानी ठानेको थिएँ । मैले राधिकालाई बिहेपछि भनेको थिएँ तिमीले जुन गल्ती गरे पनि म क्षमा दिन्छु तर तिम्रो कारणले आमाको आँखाबाट आँसु आएमा मेरा लागि अक्षम्य हुन्छ । तर मैले कल्पना गरेभन्दा उनी कर्तव्यपरायण रहिछन् । अन्तिम बेलामा आमाले उनलाई दिनुभएको आर्शीवाद थियो तैले तँ जस्तै असल बुहारी पाएस् ।

आमा ! हजुरको दैनिकी हजुरको वर्णन गर्दा पुराण जस्तै बन्छ- न म हजुरका बारेमा लेख्न सक्छु न लेखेर सिद्धिन्छ-२०६६ सालको मंसिर १४ गते हामीबाट बिदा हुनुभयो, पृथ्वीलाई नै शून्य पारेर । आज ठीक १ वर्षपछि १४ गते मंसिरमा तपाईंको फोटो कोठामा झुन्ड्याएर तपाईंलाई सम्झी यी हरफहरू लेख्दा मन अमिलो जस्तो र के न पुगेको के नभएको जस्तो तिक्तता हुँदोरहेछ ।

आमा ! तपाईंका नातिनातिनाले तपाईंको वार्षिकीमा शोक पुस्तिका निकाल्ने जमर्को गरेका छन् । तपाईंको सम्झनामा सानो ट्रस्ट राख्ने कोसिसमा छन् । तपाईंको सम्झनामा गाउँमा आँखा शिविर राख्ने प्रयत्न गर्दैछन् । सानी नातिनी डाक्टर सूचनाले त सके कुनै दिन आँखा अस्पताल नै खोल्ने योजना बनाएकी छन् । आमा तपाईंका सबै सन्तान तपाईंप्रति अत्यन्तै माया र श्रद्धा गर्छन्, यो तपाईंको महान्ता हो ।

आमा ! आज तपाईंको वार्षिक पुण्यतिथिमा तपाईंप्रति श्रद्धासुमन राख्ने जमर्को गरेको छु । तपाईंको पञ्च भौतिक शरीर हाम्रोबीचमा छैन तर तपाईंले दिनुभएको संस्कार तपाईंले दिनुभएको संस्कृति र तपाईंले छाड्नुभएको आफ्नो कर्तव्य परायणताको सेवाभावले हामीलाई बलियो डोरीले बाँधेझैं बाँधेको छ । छोरा भएर कुनै दिन कर्तव्य पूरा गर्न बिर्सेको भए, मेरो कुनै कारणले कुनै दिन तपाईंको चित्त दुखेको भए, तपाईंको आत्मामा चोट पुगेको भए सायद तपाईंले क्षमा दिन मिल्ने भए म अझै क्षमाको याचना गर्छु ।

आमा ! तपाईंको सदासर्वदा स्मरण मेरो हृदयमा रहिरहनेछ, रहिरहोस्-मलाई थाहा छैन, पुनर्जन्म हुन्छ कि हुन्न, म पुनर्जन्ममा विश्वास त गर्दिनँ तर हे मेरी आमा ! तपाईंको छोरो भई तपाईंको गर्भबाट जन्म भएकामा गौरवान्वित बन्दै यदि पुनर्जन्म हुने भए तपाईंकै कोखबाट फेरि जन्मन पाऊँ । आमा हजुरप्रति लाखलाख श्रद्धाञ्जली ।

❀





# मेरो प्रथम ससुराली यात्रा र अनुभव



भरत वस्ती

समयले नेटो काट्न धेरै समय लाग्दो रहेनछ। मेरो विवाह भएको करिब ३४ वर्ष जति भएछ। म आफैंलाई यति लामो समय भइसकेकामा पत्यारनै छैन्। अचम्म लागि रहेछ। हुन पनि किन नहोस्। मेरो सानै उमेरमा विवाह भएको भए पनि बाल विवाह भने होइन।

समय बित्दै गएको याद हुँदो रहेनछ। मेरो विवाह जेठको अन्तिम सातातिर भएको थियो। तर, मेरो विवाह सोचेजस्तो ढंगले हुनभने सकेन्। विवाहको तयारीकै अवस्थामा ससुरालीतिर जुठो परेको रहेछ। काइँली सासू बित्नु भएकाले हतार-हतार मामा ससुराली पाँचखुवादेउराली तिर विवाहको जोरजाम भएछ। तर हामी लिगलिगबाट हिँडेको वरियातसहित टोली घ्याम्पेसाल पुग्दा थकित भएका थियौं। लिगलिगबाट लामो यात्रा गरेर हिँडेको टोलीले पुन देउराली पुग्न दुई अढाई घण्टा थप हिँडाइले हैरान पारेको थियो। बल्ल-बल्ल सम्बन्धित ठाउँमा पुगियो।

त्यस ठाउँमा पुगेपछि, बूढा हजुरबा, आमा, मामा, माइजु भेला भएर आँगनमा बस्नु भएको रहेछ। सबैसँग चिनाजानी र परिचय भयो। सबैजनालाई मलाई हेर्ने उत्सुकता रहेछ। उहाँहरूले बेहुला केटा चाहिँ खोइ भन्दै खोज्न थाल्नुभयो। मलाई भने अलिक अचम्म लागि रहेको थियो। जीवनमा पहिलो पटक बेहुला भन्ने शब्द सुनि राखेको थिएँ। हाम्रो घर भएको तिर दुलाहा शब्द प्रयोग हुन्थो। ठाउँले पनि फरक पार्ने रहेछ। हमीहरूको ठाउँमा दुलाह भन्छन् भन्ने त्यहाँ बेहुलाभन्दा रहेछन्। सबैजनाको एउटै आवाज बेहुलाको हुनुहुन्छ ? भनी सोधपुछ हुँदा हाम्रो टोलीमा रहेका हरिप्रसाद देवकोटा र छोप्राकी देवकोटाले मलाई ढापमारे। म सबैको नजरमा विशेष पात्र बनें। मलाई बेहुला भनेको दुलाहा भन्ने रहेछ थाहा थिएन।

त्यहाँ हुनुभएका जनमानसले मेरो अनुहारमा एकोहोरो हेरि रहनु भएको थियो। छोरी दिनु भएको ससुरा र बहिनी दिनुभएको माइला र कान्छा जेठानले

पनि मलाई बिहेमा नै पहिलो पल्ट देख्न र चिन्न पाहुनु भएको हो। ठूलो जेठान होमनाथ दाइले मेरो घरमा आएर बिहेको कुरा पक्का गर्नुभएको थियो। त्यसैले पनि अरू दुई जेठान र ससुरासँग मेरो त्यसअघि भेट हुन सकेको थिएन। होमनाथ दाइ त मेरो घरमा रातिको समयमा आएर टीकाटाला र लगन हेराएर जानुभएको हो। उहाँले मलाई देख्नु र चिन्नु भएको थियो तर रमाइलो कुरा उहाँलाई मैले स्पस्टसँग चिन्ने मौका पाएको थिइन। परिवारका ठूला सदस्यले बिहेको निश्चित गर्ने समय र परम्परा थियो त्यसबेला।

मेरो बिहेमा ससुरा र जेठानहरू उपस्थित हुनुभयो तर सासू अनि जेठी र माइली भाउजुहरू आउनु भएन। मेरो कान्छा जेठानको त्यसबेला बिहे भएको थिएन। घरमा परेको जुठो र मामाघरबाट बिहे गर्नुपर्ने कारणले गर्दा त्यसो भएको रहेछ।

अरू सबै इष्टमित्रहरूलाई देख्ने हेर्ने मौका मिल्यो, मेरो अनुहार चिन्ने अवसर भयो। विवाहको रमभ्रम







आफ्नै ठाउँमा हुन्छ। मामा ससुरालीहरूले मात्र कन्यादान दिने अवसर भयो। १३ दिनको घर परिवारको जुठो भएकाले उहाँहरूले केही गर्न मिलेन। दर्शक बनेर बस्नु भयो उहाँहरू।

विवाह पछाडि सासू आमालाई ज्वाइँ हेर्ने अति नै रहर लागेको हुनुपर्छ। त्यसमाथि म नै कान्छो छोरी ज्वाइँ भएर होला वा टाढा भएर। दशैं आउनलाई ४-५ महिना थियो होला। तर उहाँलाई ज्वाइँ हेर्न अति रहर होला आउने जाने सम्पर्क व्यक्तिसँग फोटो मगाउनु भएको मलाई याद छ। मेरो फोटो स्कुलमा भर्खर खिचेको राम्रो थिएन। मलाई त्यो दिन अति लाज लागेको थियो। मेरो बुबाले सम्झाएर त्यो फोटो पठाई दिनुभयो। फोटोबाट उहाँले बल्ल नराम्रो भए पनि हेर्नुभएको हुनुपर्छ। समय बित्दै जादा दशैं नजिक आइपुगेको थियो। मलाई दशैंमा टीका लगाउन जान अति नै लाज लागेको थियो। त्यसमाथि पनि पहिलो वर्षको दशैं टीका। मेरो बुबा अलि कडा र हक्की स्वभावको हुनुहुन्थ्यो। मलाई पठाउनको लागि एक जना मानिस घोडा डोऱ्याउने, साथै सर-समान झोला बोक्ने समेत। म टाढा त्यति नहिँडेको व्यक्ति लामो दूरीको बाटो हिँड्दा थकाई लाग्नु स्वाभाविक कै हो। साथमा श्रीमतीसहित।

बाटामा हिँड्दै जाँदा नयाँ नौला व्यक्तिले भुसुने, चोरकाटे, जरेबर, नयाँसाँघु र निबेलसम्ममा मेरो बुबालाई चिनेका व्यक्तिले घोडा देखेर बाबु तिमी मोदराज वस्तीको छोरा हौं भनेर बाटामा सोधपुछ गर्ने गर्थे। ससुराली जान लागेका बाबु ? भन्दा लाजले भुतुक्कै भएँ म। मसेलबाट घ्याम्पेसाल हुँदै काउलेसम्म पुग्दा घोडा चढी आएको मानिस को हो ? भनेर मलाई र मेरो साथमा आएको मानिसलाई सोध्दा ससुरा बुबाको नाम ईश्वरीप्रसाद धितालभन्दा पनि धिताल साइँलाको ज्वाइँ भनी परिचय दिँदै आफ्नो ठाउँमा बेलुका पुगियो। त्यो एरियामा ससुरा बुबा पनि मेरो बुबा जत्तिकै चर्चित नामले चिनिनु हुँदो रहेछ। बाटामा श्रीमतीले ससुराको परिचय दिँदै म उहाँको छोरी भन्दै आफ्नो ससुराली घरमा पुगियो।

बेलुका खाना खाने तरखर भयो। सर्वप्रथम मलाई कान्छा जेठान शारदा दाइले भान्सामा जानलाई धोती र पानी ल्याई "लौ भान्सामा" जाऊ भन्नु हुँदा मलाई लाजको सीमा भएन। त्यस ठाउँमा पुरानो रितिस्थिति भनौं वा बुबाको आज्ञापालन। तर म पानीको भाँडो अम्खरा लिई कपडा नफेरि हात खुट्टा धोई भान्सामा प्रस्थान गरे। भान्छाको रौनक अचम्मको दखियो। सासू आमाले मेरो प्रथमपल्ट नै भन्नु पर्छ भात, दाल, तरकारी, मासु, अचार, दही दूध, घिउलगायत मिष्ठान्न भोजनहरू थिए। अर्थात् भान्छामा ९-१० वटा भन्दा कम परिकार थिएनन् होला। एकै साथ सबै परिकार दिँदा मलाई कुन खाने कुन नखाने दोधारे र लज्जालु बनिरहेको थिएँ। मैले खान सक्ने चिज खाएर बाँकी छोडी दिएर बाहिर हात धुन निस्के। भोलिपल्ट बिहान सासू आमाले ज्वाइँलाई बल्ल राम्ररी देख्न पाइयो यसअघि फोटो मात्र हेरेर बसेको थिएँ। अब भने मलाई सन्तोष लाग्यो। रहर मेटियो भन्नु भएको कुराहरू अझै पनि मेरो मानसपटलमा ताजै छन्। मलाई बारम्बार पटकै पिच्छे हेरी रहनुहुन्थ्यो। भोलिपल्ट बिहानको खाना खान जाँदा उहाँले खोइ यी चिजहरू ज्वाइँलाई देखाउन मात्रै हो, खोइ खान सक्नु भएन ? भन्दा मलाई साह्रै के भनौ लाजले सीमा भएन।

मलाई ससुरालीतर्फ विवाहदेखि हालसम्म यी तलका घटनाहरूले स्मरण आइरहेछ।

१- लामो बाटो हिँड्नु पर्दा सुरुमा बिहे गर्न जाँदा लिगलिगदेखि देउरालीसम्म १६ घण्टा हिँड्नु परेको

२- दुलाह नभनी कहीं कतै बेहुलाभन्दा मलाई सर्वप्रथम याद त्यो दिनको झझल्को आइरहन्छ।

३- कहीं कतै खान खान जाँदा (चाहे होटलमा ) धेरै चिज लावालस्कर दिएको देख्दा त्यो दिनको याद आइरहन्छ।

मैले यो लेख सासू आमाको पहिलो वार्षिको अवसरमा सम्झने कोसिस गरेको हुँ। उहाँको आत्माको सुख शान्ति साथै सम्पूर्ण परिवारजनहरूलाई हार्दिक समवेदना व्यक्त गर्छु। ❀





# माइतीघर र आमाको माया

सोमा वस्ती

गोरखाको रमणीय गाउँ तान्द्राङ काउलेमा २०१९ सालमा ईश्वरीप्रसाद र हस्तकुमारीको कान्छो सन्तानका रूपमा मेरो जन्म भयो। मेरा बुबा आमाको छ छोराछोरी मध्ये माइली दिदीको म आफू नजान्दै ९ वर्षको अल्पायुमा नै स्वर्ग भयो। आमा-बुबाको कान्छी छोरी भएको नाताले सानैदेखि लाडप्यारमा हुर्केकी सानी पुतली जस्ती थिए।

म करिब ४/५ वर्ष थिएँ कि जस्तो लाग्छ। आमा-बाबु किसान हुनाले दिनभर खेतबारीमा काम गर्न जानुपर्थ्यो। आमालाई पटकै छोड्न मन लाग्दैन थियो मलाई त्यति बेला। आमालाई साथमा नै पाए त्यति बेला मलाई आनन्द लाग्थ्यो। आमाकै वरपर खेलिरहन मलाई मन लाग्ने भए पनि आफ्नो काममा आमाले मलाई छोडेर जानु हुन्थ्यो। अनेक वाहना बनाएर मलाई भुलाएर मलाई छोडेर जानु हुन्थ्यो। आमा आएपछि सधै आमासँग नै पिरोलीरहने मेरो बानी नै वसेको थियो। मैले जति पिरोलीरहे पनि कहिल्यै आमाले मलाई कुटेको र गाली गरेको थाहा छैन। मेरी आमा साच्चै ज्यादै सहनशील र ममतामयी हुनुहुन्थ्यो।

एक दिनको कुरा हो, आमाले मलाई घरमा छोडेर खेतबारीको काममा जानु हुँदैछ भनेर थाहा भयो। मैले आमालाई पिरोल्न थाले। आमा मलाई भोक लाग्यो भनेर। आमाले तत्कालै मलाई खानेकुरा दिनुभयो तर मेरो चित्त बुझेन। जसरी पनि आमालाई काम गर्न जान नदिएर मैले घरमा नै रोक्नु थियो। फेरि आमालाई भने मलाई चोलो चाहियो। आमाले मलाई आफ्नो पुरानो चोलो दिनुभयो मैले मानिन। तपाईंले लगाएको चोलो लगाउँछु भनेर जिद्दीमा लागें। आफूले लाएको चोली मलाई लगाई दिएर पुरानो चोलो लगाएर आफू फेरि काममा जान हतारिनुभयो। मलाई नयाँ निहुँ चाहिएको थियो। मैले आमाले लगाएको फरियासमेत लगाइ दिन झगडा गरे, आमालाई साँच्चै रिस उठेछ र नजिकै बस्ने दाइहरूलाई भन्नुभयो तिमीहरूले बैनीलाई सम्झाएर फुल्याउनु पर्‍यो। तत्कालै ठूल्दाइ र सान्दाइ मलाई सम्झाउन थाल्नुभयो तर मैले अझै मानिन। अन्तमा आमाको पटुका लगाउने भनेर आमालाई भुल्याउने कोसिस गरें। दुईवटा दाजुहरू मिलेर मलाई आमाको पटुका लगाई दिने भनेर आमाको पटुकाले पिंडीको खाँवोमा बाँधी दिनुभयो। आमालाई पटुका फुकाल्दिन पर्‍यो भनी रुँदै कराउँदै गर्दा आमाले मलाई दाइहरूको जिम्मा छाडेर काम गर्न जानुभयो। त्यो घटना आज पनि मेरो सम्झनामा ताजा छ। धन्य आमा ! मैले जे मागे पनि दिन तयार हुनुभयो, मलाई बाध्य भएर त्यस्तो बेला छाडेपनि हतारमा घरमा फर्केर खाजा खुबाउनु हुन्थ्यो। सम्झदा आमाको सेवा जीवनभर दिएर जानुभयो तर आमाको ऋण तिर्न कहिल्यै सकिन मैले।

**मैले जति पिरोलीरहे पनि कहिल्यै आमाले मलाई कुटेको र गाली गरेको थाहा छैन। मेरी आमा साच्चै ज्यादै सहनशील र ममतामयी हुनुहुन्थ्यो**

२०६६ सालको मंसिर १४ को दिउँसोको अनिष्ट समय। यस बेला आमा सधैंका लागि हामीलाई छोडेर जानुभयो। विवाहपश्चात् दिदीभन्दा म अलि टाढा







पुगें । आमाले सधैं भन्ने गर्नुहुन्थ्यो सानो छँदा मलाई छाड्न चाहँदैन थिइ तर उही छोरी टाढा भई ।

म १४ वर्षकी थिएँ । बुवा-आमाले मेरो विवाहको कुरा गरिरहनु भएको थियो । बुवाले मेरो विवाहको लागि उपयुक्त केटा नपाएको कुरा आमालाई सुनाउनु हुन्थ्यो । आफ्नो कर्म छोरीले पनि ल्याएकी नै छ किन चिन्ता गर्ने भनी आमा सम्झाउनु हुन्थ्यो । यसरी त्यसताका धेरै ठाउँमा केटाहरूका बारेमा घर चर्चा हुने गर्दथ्यो । अन्तमा माइतीबाट अलिक टाढा वस्ती परिवारमा विवाह गर्ने टुंगो लागेछ । आमाले विवाह हुनुपूर्व रातभर विभिन्न व्यावहारिक विषयमा गन्थन गरी बिताउनु भएको सम्झदा आज पनि मेरी आमा आफ्नो सन्तानप्रति कति धेरै चिन्तित हुनुहुँदो रहेछ भनेर सम्झन्छु । आमालाई सम्झदा आज पनि पटक-पटक रुन मन लाग्छ । आजको आमाको वार्षिक पूण्य तिथिमा मेरो आमाप्रति सम्झनामा कोरिएको यो एक ढिक्का आँसुको थोपाका अक्षरहरू उहाँकै आत्माको चिर शान्तिको कामना गर्दै समर्पण गर्दै आगामी दिनमा थप सम्झनाका क्षणहरू कोर्दै जाने प्रतिबद्धतासमेत व्यक्त गर्न चाहन्छु ।

अन्तमा आमामाइती घर जाने र आमासँग भेट्ने मेरो इच्छा सधैंको लागि अन्त्य भएको एक वर्ष बित्यो । त्यसैले ममतामयी आमाको सहनशीलता, माया, प्रेम र बाल्यकालको सम्झना गर्दै भगवानले मेरी आमाको आत्माको चिर शान्ति प्रदान गरून् भन्ने कामना गर्दै मेरो दुई शब्दको अन्त्य गर्छु ।❀











# आमा र गुरु दुवै



चन्द्रकुमारी धिताल

आठ वर्षको सानो उमेरमै आफ्नो जन्मघर छोडेर काउले गाउँमा जानु मेरो बाध्यता थियो। सानो उमेरले गर्दा मलाई कता जाने, कसो गर्ने थाहा थिएन। मेरो बिहे गरेको भन्ने मात्र थाहा थियो। स-साना देवरहरू मेरो सानोमा खेल्ने साथीहरू जस्तै हुनुहुन्थ्यो। गोरी उज्यालो अनुहार सधैं हासी रहने मेरो सासूआमाले तँ त हाम्रो दुखमा पाएको बुहारी भन्नुहुन्थ्यो।

सानोमा घैया गोड्दा, धान रोप्दा, कादो रोप्दासँगै लगेर सिकाउनु हुन्थ्यो। मेलापात गर्दा होस् या उकाली-ओराली गर्दा सासू-बुहारीसँगै हुन्थ्यौं। उहाँको नरमपन, मिजासिलो व्यवहारले मलाई ठूलो घरपरिवारमा भिज्न सजिलो थियो। ससूराले कराउँदा होस् या काम बिग्रादा सधैं मेरो कामलाई ढाकछोप गर्दिनु हुन्थ्यो। टुनिबोटे खोला, टारीपाखा, वनपालेमा घाँस काट्न जानु हाम्रो दैनिकी थियो।

एक दिन सासू-बुहारी भएर अम्फे खेतमा डल्ला फुटाउन गएका थियौं। फागुनको खडेरीले गर्दा डल्ला फुटाउन सकिएन अनि बारीको डिलमा बसेर एक सुख दुःखका कुरा गर्दै दिनभरि बिताएर घर फर्किएको क्षण आज सम्झदा पनि मीठो लाग्छ।

उहाँ मेरो अभिभावक बनेर सधैं काममा अग्रसर गराइरहनु हुन्थ्यो। पछि घरमा हामी तीन बुहारी भयौ। हामी तीन बुहारीलाई सम्झाउनु, काम सिकाउनु उहाँको दैनिकी जस्तै थियो। सबेरै ढिकी कुट्दा, मिर्मिरे उज्यालोमा चकटी र बत्ती, कुच्चो लिएर सकिनसकी काममा सघाउन आउनु हुन्थ्यो। अरूलाई दुःख नदिने बानी, अनि थकाई लाग्दा होस् या जहीले पनि मिठो हाँसो र बोली गर्नुहुन्थ्यो।

म सानै छँदाको कुरा हो। उहाँ र मसँगै खाना बसेका थियौ-उहाँ खाना खान अलि ढिलो समय लगाउनु हुन्थ्यो। म खाना खाएर बाहिर पिंढीमा उहाँलाई कुर्दै बसी रहेकी थिए, म त्यही निदाए छु। पछि उहाँले नै बोलाउनु भएछ। म डरले मन काप्दा पनि उहाँले हाँस्दै निदाइछे भन्दै सुत्न जा भन्नुभयो। सानो छँदा यस्ता घटनाहरू धेरै थिए। तर पनि उहाँ कहिल्यै रिसाउनु हुन्नथ्यो। सानी बुहारी थाकी छ भन्नुहुन्थ्यो। उहाँको अरूको मनको भावना सजिलै बुझ्नु हुन्थ्यो। स-साना नाति सँगै जिस्कनु अनि नाति-नातिनालाई खुवाउने निउमा सासू-ससुराको कहीलेकाहीं मिठो भनाभन हुन्थ्यो। हामी बुहारीहरू बाहिर बसेर हाँसिन्थ्यो। जब उहाँको आँखा बन्द भयो अनि उहाँलाई उपचार गराउन काठमाडौं ल्याइयो, त्यसपछि उहाँ गाउँ फर्कनु भएन। उहाँको कमजोर स्वास्थ्य स्थिति अनि दुवै आँखा बन्द हुँदा पनि उहाँ गाउँ सम्झनु हुन्थ्यो। अनि गाउँपाखामा सँगै बिताएका क्षण भन्नुहुन्थ्यो। अनि आफैं कहिलेकाहीं भक्कानिनु हुन्थ्यो। उपचारका क्रममा बानेश्वर हस्पिटलमा मेरै काखमा बित्नुभयो, जिन्दगी यही हो जस्तो लाग्छ।

**उहाँको कमजोर स्वास्थ्य स्थिति अनि दुवै आँखा बन्द हुँदा पनि उहाँ गाउँ सम्झनु हुन्थ्यो। अनि गाउँपाखामा सँगै बिताएका क्षण भन्नुहुन्थ्यो।**









# सासुको सम्झना



मधु धिताल

मान्छेको जीवन कर्कलाको पानी जस्तै हो जता ढल्कन्छ, त्यतै पोखिन्छ, अनि पानी सधैं रहँदैन पनि, कुन बेला कहाँबाट बाहिरिन्छ पत्तै हुँदैन । सानै उमेरमा आमाको काख छोडी बुहारीको रुपमा घरमा भित्रिएदेखि ५० वर्षको मेरो जीवन यात्रामा उहासँग बिताएका दिनहरु साँच्चै नै अविस्मरणीय थिए । सधैं नै उहाँको भूमिका अभिभावकको रुपमा रहेको थियो ।

कम उमेरमा विवाह भएकोले ती दिनहरु खासै सम्झना छैन तर पनि थाहा पाउने भएपछि उहाँबाट आफू धुलिमाटी खेल्ने गरेको र एउटा सानो लोटा लिएर पानी लिन पंधेरामा जाने गरेको कुराहरु सुन्दा मिठो मातृत्वको सम्झना आउँथ्यो । विवाहपछि केही समय माइतमा नै बिताएको तथा पछि श्रीमान र छोरा छोरीहरुसँग श्रीमानको जागिरसँगै घरबाट टाढा बसेकोले सासुसँग मैले धेरै समयसँगै बिताउन सकिन तर पनि जति समय उहाँको सामिप्यमा बित्यो । ती सबै नै व्यावहारिक कुराहरु सिक्न, सिकाउन तथा अर्ति उपदेश लिनलाई भएको थियो ।

छोराछोरी हुनुभन्दा धेरै अगाडिको कुरा हो । एकदिन उहाँसँग जलुकेमा धान रोप्न गएको थिएँ । उहाँले बिउ काढ्न भन्नुभयो । थाहा छैन किन, म रुन थालेछु । बिउ काढ्नुको सट्टा दिनभर रोएछु उहाँले थाहा पाउनु भएछ अनि दिनभर रोएर बिताइछस् किन रोएको भनेर मलाई सम्झाउन थाल्नुभयो । सायद कारण पनि थिएन होला वा उहाँको सम्झाईले हो म रुन छोडे अनि हामीसँगै घर फर्कियौ ।

विछोड पछि सम्झना अझै गाढा हुने प्राकृतिक स्वभावले हो कि उहाँको अभाव देहान्तपछि आज अझ बढी खड्कदो छ । केही पर्दा सोध्ने अनि अर्ति उपदेश लिने अविभावक नहुँदा साँच्चै टुहुरो महसुस भएको छ ।

उहाँले निर्वाह गर्नुभएको अविभावकत्व हामीले आफ्ना छोराछोरी अनि बुहारीमा दिन सकिन्छ वा सकिन्न तर सहनशिल, कहिल्यै झर्को नमान्ने अरुको नराम्रो नचिताउने उहाँको अनुकरणीय व्यक्तित्व हाम्रो लागि मार्गदर्शन भइरहने छ । ❀







# सासू हो की आमा, छुट्याउन गाह्रो भयो



राधिका धिताल

२०३५ सालको असार ६, बुधबारमा मेरो जीवनले नयाँ मोड लियो । म मेरो जन्म घर आँपचौर छोडेर धितालकी बुहारीको रूपमा काउले आएँ । बुहारी बनेर आउँदा मेरो मनमा अनेक कुराहरू उब्जन्थे ।१९ वर्षसम्म माइतमा आमा बुवा र दुइटा भाइहरूसँग बिताउँदा म जन्मेको गाउ स्वर्ग जस्तै रमाइलो लाग्थ्यो । वुबा रुद्रप्रसाद भट्ट मास्टर जागिर छाडेर राजनीतिक र समाज सेवामा लाग्नु भएकाले म आमाको काम सघाइ दिन बिताइ रहेको थिएँ। मेरो गाउँ आपचौरमा आठ, दसघर एकै ठाउँमा झुरुप्प बस्ती भएकाले काका, काकीहरू, ठूलावा, दिदी, बहिनी, भाइहरू र हजुरआमाहरू असाध्यै रमाइलो लाग्दथ्यो घरमा गए पछि कस्तो होला अर्काको घर ? मनमा एक प्रकारको डर लाग्थ्यो । म काउले धिताल गाउँमा ईश्वरीप्रसाद धितालकी कान्छी बुहारी बनि घरमा आएँ ।

मेरो श्रीमान् स्कुल मास्टर जेठाजुहरू पनि मास्टर भएकाले हामी ३ वटी बुहारी घरको काम खेतीको काम गरी बिताउथ्यौं । दिदी-बहिनीको बीचमा कहिलेकाहीं केही भनाभन भए पनि सासू आमासँग जीवनमा एक दिन पनि नराम्रो भएन । अति शान्त, शीतल स्वभाव, बरु आफू दुःख सहेर पनि बुहारीलाई माया गर्ने सासु देख्दा मलाई आफूलाई जन्म दिने आमाभन्दा पनि बढी नरम र व्यावहारिक लाग्यो ।

उहाँ तीर्थ गर्न मुक्तिनाथ बद्री, केदार काशी, बनारस जानुभयो, घरको सबै जिम्मा हामी बुहारीले नै लियौ । सप्ताह पुराण लगाउनुभयो । हामीले उहाँको इच्छा पूरा गर्ने प्रयत्न गर्‍यौं । आमाको चित्त नदुखोस् जस्तो लाग्दथ्यो । मैले चारवटा बच्चा जन्माएँ । तीनवटा बच्चा राम्रोसँग हुर्किए । मैले त केवल दूध मात्र खुवाई काममा जानु पर्थ्यो, सबै बच्चाहरू सासूकै काख प्यारमा उहाँकै मायामा हुर्के । उहाँले आफ्ना छोराहरूलाई भन्दा हामीले जन्माएका छोराहरूलाई बढी माया गरेर आमाले नै हुर्काउनु भयो जस्तो लाग्छ मलाई ।

आमा आँखा नदेख्ने हुनुभयो, त्यसपछि बेला-बेलामा उहाँले मैले कुनै पाप गरेको थिइन् भनी पिर लिनुहुन्थ्यो । आँखा नदेख्दा पनि उहाँ आफ्नो सरसफाइमा आफैं अग्रसर हुनुहुन्थ्यो । आफ्नो कारणले अर्कालाई पिर नपरोस् भन्ने भावना उहाँमा थियो । म उहाँकी कान्छी बुहारी भएको नाताले हो वा मेरो भाग्यले उहाँलाई अन्तिम क्षणसम्म पनि खाना पकाएर खुवाउने सौभाग्य पाएँ । अघिल्लो वर्ष उहाँ स्वर्गारोहणभएपछि मात्र मैले याद गरें मैले आपचौर छोडेर उहाँको छायामा आएको पनि ३१ वर्ष बितिसकेको रहेछ । यति लामो समय उहाँको निकटबर्ती रूपमा बिताउँदा उहाँ मेरो आमा हो की सासू मैले फरक छुट्ट्याउन सकिन । मान्छेले सासू-बुहारीको झगडा हुन्छ भनेको सुन्दा मलाई पत्यारै लागेन ।

छिमेकमा सासू बुहारीको झगडा सुन्दा उहाँ हसिली भएर सुनिरहनु हुन्थ्यो । ३१ वर्षमा कुनै दिन मात्र नभएर कुनै क्षण पनि उहाँले झर्केको चर्को आवाजले बोलेको मैले अनुभव नै गरिन् । मैले आज उहाँलाई सम्झदा मनमा भक्कानो पर्छ । उहाँका गुणहरूको व्याख्या गर्न म सक्तिन-सायद बुहारी भएर मैले त्यस्तो सासू पाएको मेरो पूर्व जन्मको भाग्यले नै होला । म त्यस्तो सासू बन्न सक्छु कि सक्दिनँ त्यो भविष्यले बताउने छ, मेरो सासू मेरो लागि मेरो आमा नै हो उहाँको 'माया समुद्रभन्दा गहिरो र आकाशभन्दा निर्मल' थियो- उहाँ मेरो लागि आदर्श आमा हुनुहुन्थ्यो । उहाँ मेरो आमा हो कि सासू यो कुरा छुट्टाउन मलाई मुस्किलै छ । 







तिलकुमारी भट्ट (बोली)/ टीकाप्रसाद भट्ट (लेखी)

# सानिमाप्रति श्रद्धासुमन

***'अवश्य जन्मने मर्छ, मर्नेको जन्म नित्य छ ।***
***नभई नहुने माथि तिम्रो शोक अयोग्य छ ॥'***

कोमल गीताको श्लोकको उद्धरणका साथ सानिआमा हस्तकुमारीको वार्षिक श्राद्धको अवसरमा सम्झना स्वरूप केही शब्दहरू कोर्ने जमर्को गरिएको छ ।

मृत्यु कसैले चाहेर मात्रै हुने वा टर्ने होइन यो त नित्य छ तसर्थ त्यसै क्रममा सानीआमाको स्वर्गारोहणलाई लिएर त्यस परिवारप्रति परेको शोकको समभाव र समवेदना प्रकट गर्न चाहन्छौं ।

सृष्टीको अनादि कालसँग जोडिएको ममताका खानी आमा र सानिआमासँग सँगै जोडिएर आउँछन् । उखान जोड्ने हो भने 'आमा मुनिकी सानिआमा', 'आमाका कुरा सानिआमालाई' यस्ता शब्द प्रयोग भएको देखिन्छ । सानिआमाको शाब्दिक अर्थले आमाकी बहिनी भन्ने जनाउँछ ।

हाम्री आमा र सानिआमामा दोहोरो नाता थियो, एकातर्फ देउरानी, जेठानी र अर्कोतर्फ फूपुचेली र मामाचेली, रुक्मिणा आमा फुपू सिम्खडाकी छोरी र हस्तकुमारी सानिआमा अम्गाई मामाकी छोरी । आमासँगै जन्मिएका सानिआमाहरू धेरैहुँदासमेत मामाकी छोरी जस्तो भान हुन्नथियो । आमालाई, एक त नजिकको नाता त्यसमाथि बावाको छोटो उमेरमा देहावसानले टिठ्याउने व्यक्ति झन् नजिकको हुँदो रहेछ । देउरानी जेठानी नातालाई उछिनेको थियो दिदीबहिनीको नाताले आमाहरूलाई । एउटा सिम्खडाकी छोरी, अर्की अम्गाईकी छोरी, तर स्वभाव एउटै, लालावाला हुर्काउँदा झर्कनु रिसाउनु बैधव्य जीवनमा थियो भने सानिआमालाई लालावालाको गनगनको साथमा पारिवारिक अन्य झमेला, तर दुवै थिए मातृत्वका प्रतिमूर्ति ।

आमाको अनुहारमा रिसको आवेग देखिएमा दुगुरेर पुग्थ्यौं सानिआमाको मा, आफूलाई सुरक्षित राख्न, सानिआमा कहाँ मीठो चोखो पाक्दा हाम्रो भाग लागेकै हुन्थ्यो । बावाहरूमा कुनै दिन वैरभाव हुँदाका बखतमा समेत आमा र सानिआमामा मनमुटाव देखिएन र दुवैतर्फको सन्तानप्रति ममता उत्तिकै झल्कन्थ्यो । तसर्थ आमाहरूको ममताले हामी आमाहरूमा समेत एक आपसमा ममता जागेको थियो । त्यसैले आफ्नो दाजु र दिदीबहिनीको बीचमा हुँदासमेत साहिला बाका छोराछोरी जस्तो लागेन । सानिमा पट्टिका दाजुभाइ, दिदीबहिनीलाई , त्यसमा पनि हात समाएर खेलाएकी दिदी भगवती एउटै बदरबाट जन्मेजस्तो लाग्छ ।

आमाको देहावसानको बेलामा सानिआमाले हामीप्रति मातृत्व प्रकट गरेको क्षणले हामीलाई सहने शक्तिप्रदान गरेको थियो । आज सानीआमा समेतलाई गुमाउनुपर्दा वेदनाका भाव प्रकट गर्न नसकिने गरी गुम्सिएको छ ।

उत्कृष्ठ बंशमा कहलिएकाहरू मध्ये लक्ष्मीदास धितालका छोराहरू भैरवप्रसाद, ईश्वरीप्रसाद हुन् भने गजाधर भट्ट (सुवेदार) का छोरा छायादत्त भट्ट एवं



बल्लव भट्टका छोरा कुलप्रसादहरू खानदानीमा कहलिएका हुन् ।

उखानै छ 'सिस्नो भने पनि ठूलो ताउलोमा पकाएर खाने' को वंशमा सम्बन्ध जोडनु, साननै अर्को कुरा भन्ने बुढ्यौली भनाई यद्यपी छ ।

सोहि अनुसार सम्बन्ध जोडिएका हामी छोरी चेलीहरू घर माइत गर्दा पनि उच्चशिर गरेर हिँडिरहेका छौं । सासू-ससुरा वा आमाहरू सम्धी-सम्धिनाको रूपमा एकआपसमा भेटघाट भलाकुसारी भएको हामीले देखिरहेका छौं ।

जीवात्माको मृत्यु अवश्यम्भावी हो तर पनि मातृत्वको ममताबाट बिछोडिन पर्दा असैह्य वेदना बोक्नुपर्ने रहेछ । आफुमा वेदनापर्दा अरूमा पनि यस्तोपर्छ भनी सम्झना समय लाग्ने रहेछ । आखिर सहेर आफ्नो दिनचर्या चलाउनैपर्ने बाध्यता रहेछ ।

साहिला बा र सानिआमाको आदर्श जीवन एवं सन्तानप्रतिको ममताले बावुबिनाका टुहुरा हामीलाई त असलबाटो लगाएको छ भने उहाँहरूका आफ्नै सन्तान किन कम हुने । त्यसैले पीएचडी जस्तो फिलोसफर बन्ने सौभाग्य देख्न पाइएको छ, त्यो परिवारमा ।

आफ्नो सन्तानको भलो कुरा सुनेर सानिआमा सन्तोष लिएरै स्वर्गारोहण हुनुभयो । उहाँको देहावसानको एकवर्षे श्राद्धमा उहाँको आत्माले चिरशान्ति पाओस् यही हाम्रो कामना र हार्दिक श्रद्धाञ्जली । ❀

# निष्ठा र आदर्शको स्रोत



**भीमसेन देवकोटा**

तीन दशक अघि एक किशोर छँदा देखि मैले उहाँलाई नजिकबाट चिन्ने अवसर र उहाँको न्यानो ममता र स्नेह पाएको हुँ । उहाँबाट मैले एउटा सफल दाम्पत्य जीवनमा हुनु पर्ने अविरल प्रेम, निष्ठा र समपर्ण एवं जीवनका आदर्शहरु सिक्ने अवसर पाएँ । उहाँ एक साधारण गृहिणी हुनुहुन्थ्यो तर सवैका लागि उच्च आदर्श र प्रेरणा र आदर्शको स्रोत बनिराख्नु हुन्थ्यो । उहाँमा परिवार, आफन्तजन एवं अन्य मानिसहरुको समस्यालाई बुझ्न सक्ने क्षमता थियो । साथै आफ्नो तर्फबाट हुनसक्ने सहयोगपनि प्रदान गर्नु हुन्थ्यो । धैयर्ता उहाँबाट हामीले सिक्नैपर्ने एउटा महत्वपूर्ण गुण हो । उहाँको जीवनशैली साधारण थियो तर आदर्श र व्यवहार भने उच्च । मलाई लाग्दछ उहाँका उच्च आदर्श र निष्ठावाट वर्तमान एवं भावी पुस्ताले धेरै कुराहरु सिक्न र आफ्नो जीवनलाई सफल बनाउन सक्नेछन् ।

आजको यस घडिमा म उहाँको आत्माको चिरशान्ति र आदर्श एवं निष्ठाको अमरत्वकालागि हार्दिक कामना गर्दछु ।







# हजुरआमा

शिशीरकुमार भट्ट

*हजुरआमा सबैका हुन्छन्*
*सवैभन्दा प्यारी मेरी हुनुहुन्थ्यो*
*सरल सौम्य अनि करूणाकी खानी*
*मृदु भाषी, असल, ज्ञानी सवैभन्दा दानी*
*कटुवचन कहिल्यै निस्केन कसैप्रति*
*लगन इमान्दारीता, पतिभक्तको उहाँ एक निसानी*
*उतार चढाव, अवरोह सधैमा सफल एक गृहणी*
*छोरा छोरी नातिनातिना सबैका लागि उहाँ जननी*
*उहाँका सन्ततिमात्र होइन इष्टमित्र पनि*
*जसले उहाँलाई भेटे चिने सबै बने ऋणी*
*नेपथ्यकी नायिका मेरी हजुरआमा*
*छोडेर गयौ तिमीले तर तिमी सधैं छौ हामीमाझ ।*



# हजुरआमा र म

अनुस्का भट्ट

हजुआमासँगको मेरो सामिप्यता विवाहपश्चात पहिलो पटक म गोरखाको पुर्ख्यौली थलो तान्द्राङ गएपछि मात्र भएको हो । उहाँले मलाई असाध्यै माया गर्नुहुन्थ्यो । पहिलो नातिनी बुहारीको रूपमा पाउँदा ज्यादै खुसी हुनुभएको थियो । काउले मामा घर जाँदा उहाँ आफैंले भान्सामा बसेर थपी-थपी खुवाउनुभएको घिरौंला र भिण्डीको तरकारीको स्वाद अझै मेरो जिब्रोमा झुण्डिरहेको छ । त्यस्तो स्वाद मैले फेरि खान पाएको छैन ।

म बिहेपछि अमेरिका गएँ । फेरि पाँच वर्षपछि नेपाल आउँदा उहाँको पहिलो पनाति शिश्यानलाई देखाउन आएको थिएँ । अफसोच ! उहाँले शिश्यानलाई देख्न पाउनुभएन । उहाँ पनातिलाई देख्न सक्ने अवस्थामा हुनु हुन्न थियो । उहाँको दुवै आँखाको ज्योति गुमिसकेको थियो । तर खुसीका आँसु बगाएर पनातिलाई छाम्नुभएको थियो । उहाँ ज्यादै खुसी हुनुहुन्थ्यो पनाति पाएर ।

फेरि गत वर्ष नेपाल फर्कंदा उहाँलाई भेट्यौं । हजुरआमा संधै रातो लुगामा सेतो कपाल अनि हजुरबुवासँगै सिनामंगलको खाटमा बसेको मेरो स्मृतिमा ताजानै छ । उहाँको पार्थिव शरीरलाई ह्याम्स हस्पिटलमा आफ्नै आँखाले देखे पनि अझै हामी सबैको प्रतिक्षामा सिनामङ्गलमा हुनुहुन्छ जस्तो लागिरहन्छ । ❀





# हस्तमालामा दुई शब्द



तुलसीप्रसाद लामिछाने

पूजनीय आमा हस्तकुमारी धितालको प्रथम वार्षिकीको उपलक्ष्यमा मेरो यिनै दुई शब्दमार्फत उहाँमा हार्दिक श्रद्धाञ्जली चढाउँछु।

साँच्चै भन्नुपर्दा काउले गाउँको आफ्नो धिताल परिवारका सदस्यहरूलाई मात्र नभई ओख्ले, पौवा, डाँडापारि र बटुवासमेतलाई आफ्नो र अर्काको नछुट्टाई एकनासको व्यवहार प्रदर्शन गर्नुहुने आमा हस्तकुमारी धिताल जस्ती नारी पाउने काउले गाउँ कृतज्ञ छ।

*सबैलाई आफ्नै देख्ने विशाल मनका दिव्य आँखा*
*न त थियो कोहीलाई काख*
*न नै थियो कोहीलाई पाखा*
*पाकेको त पाकी हाल्यो, काच्चै भए पनि*
*सबका मुखमा अमृत पुग्थ्यो थोरै भए पनि*

*छोराछोरी जति सबका हुन्थे, आफ्नै बाबु नानी*
*सबको राम्रो देख्न खोज्ने साह्रै राम्रो थियो बानी*
*आमा आफ्नी महान लाग्छिन्*
*प्रिय पनि हुन्छिन् अनि*
*यस्ति आमा पाउने काउले हुनैपर्छ साँच्चै धनी।*

# आमा



सुमित्रा लामिछाने

*आमा तपाईंलाई लाखौंलाख श्रद्धाञ्जली*
*तपाईं साँच्चिकै देवी हुनुहुन्थ्यो, हाम्रो लागि*
*आफ्नो दुःख चाहिँ केही नठानी,*
*अरूको दुःखमा पनि साथ दिने बानी*
*भगवानसँग यही प्रार्थना गर्छु,*
*फेरि मानिसको चोला लिई*
*फेरि जन्म लियो भने*
*तपाईं जस्तै आमा पाउँ भनी*

# चुरोट



आरजु लामिछाने

*चुरोट हो मेरो नाम*
*धुवाँ उडाउने मेरो काम*
*मान्छेलाई खोक्रो बनाउँछु*
*अस्पताल पुऱ्याउँछु*
*अस्पताल पुऱ्याई स्टेचरमा गुडाउँछु*
*स्टेचरमा गुडाई संसारबाट उडाउँछु*











# मेरो ठूलीआमा

दीपक बगाले

पाँचखुवा देउरालीस्थित अम्गाई गाउँको भानुभक्त अम्गाईको पहिलो सन्तानका रूपमा वि. सं. १९८१ सालमा पहिलो पाइला टेक्नु भएकी हस्तकुमारी धिताल (मेरी ठूली आमा) भानुभक्तका आठजना सन्तानमध्ये जेठी सुपुत्री हुनुहुन्छ । उहाँको बाल्यकाल देउरालीमा नै बित्यो । सानै उमेरदेखि नै उहाँ अत्यन्तै ज्ञानी र दयालु स्वभावको हुनुहुन्थ्यो रे । विवाहपछि उहाँले तान्द्राङको काउलेमा लामो समय बिताउनुभयो । पछि अलिक अशक्त बनेपछि काठमाडौं सिनामंगलमा रहन थाल्नुभयो ।

आठजना सन्तानमध्ये उहाँ जेठी हुन्नुहुन्छ भने मचाहिँ कान्छी बहिनीको छोरा हुँ । ममताकी खानी प्रेरणाको प्रतिमूर्ति हाम्रो ठूलीआमा आज यस धर्तीमा हुनुहुन्न । तर पनि उहाँको आशीर्वाद र सम्झनाका रहरहरु सधैं हाम्रो मानसपटलमा ताजै रहिरहनेछ । उहाँका गुणहरू यस कागजमा सीमित हुन असम्भव नै छ । उहाँ त्यति दयालु, साहसी, कर्मशिल हुनुहुन्थ्यो । उहाँका सन्तानहरु आज ठूला-ठूला पोष्ट, देश विदेशमा ख्याति कमाउन सफल भएका छन् । त्यो सबै उहाँहरुको तपस्या र त्यागको फल हो । उहाँले आफ्नो जीवनको दुई तिहाइभन्दा लामो समय आफ्ना सन्तानको लागि नै खर्चिनुभयो । त्यसैको फल स्वरुप आज सन्ततीहरुको प्रगतिका सिंढी चढिरहेका छन् ।

जीवनका अनेकै उत्तार चढावहरुमा उहाँ कहिल्यै हरेस नखाई जीवन रूपी रथलाई निरन्तर अघि बढाउँदै लैजानुभयो । उहाँको आफ्ना सन्तानहरुप्रतिको अपार स्नेह कहिल्यै डगमगाएन उहाँको वैवाहिक जीवनयात्रा अत्यन्तै सुखद र लामो रह्यो । उहाँहरु दुई जना बूढाबूढी लगभग ८० औं वसन्तसँगै पूरा गर्नुभयो । जीवनको अन्तिम समयमा हाम्री ठूलीआमाले नेत्र ज्योति गुमाउनुभयो । त्यस बखत आफ्ना छोराछोरी नाति-नातिना, बूढा र बुहारीहरु यहाँका आँखाको ज्योति बन्दै अगाडि लैजानुभयो । उहाँहरुको आमाप्रतिको अपार स्नेह र प्रेमले गर्दा सायद ठूलीआमालाई आँखा नदेखेको महसुस भएन होला जस्तो मलाई लाग्छ । बाहिरी आँखाले नदेखे पनि भित्रिमनले देखेर छामेर उहाँ सन्तुष्ट हुनुहुन्थ्यो । ठूलो बुवा पनि बुढेसकालमा आफ्नो जीवन संगिनीको वियोगले दुखित हुनुहुन्छ । विधिको विधान नै यस्तै रहेछ कोही पनि सँगै अवश्य पनि जान सकिँदैन भन्दै आफ्नो मनलाई आफै सम्हाल्दै दिनहरु बिताइ रहनुभएको छ । ठूली आमा छँदा दुई जना बूढा र बूढी दिनरात गन्थन गर्दैमा समय बितेको पनि थाहा पाउनु हुँदैन थियो । तर आजकाल ठूलो बुवालाई अवश्य पनि एक्लो महसुस भएको होला ।

हाम्रो परिवारको सबैभन्दा जेठो सदस्यको स्वर्गारोहण हुँदा हामी सबैलाई मातृविहीन भएको अनुभव भइरहेको छ । यस अवस्थामा ईश्वरले हामीलाई धैर्य धारण गर्ने शक्ति दिउन भन्ने प्राथना गर्छु र स्वर्गवासी आमाको आशीर्वाद सबै हामी माथि रहिरनेछ भन्ने मैले ठानेको छु । हामी हाम्री आमाको कहिल्यै ऋण चुकाउन के सकौंला तर पनि उहाँको सम्झनाको लागि श्रद्धाञ्जली अपर्ण गर्न चाहन्छौं । ❀





# मेरो अतीत



छवि अम्गाई

म कुनै लेखक होइन। न कहिल्यै लेख्ने धुनमा हुन्थें। कहिलेकाँही चाहिँ मनमा लागेका कुरा लेखेर राख्नुपर्छ भन्ने सोच्थें तर पनि लेख्ने जमर्को कहिल्यै गरेको थिइनँ। आज (कात्तिक २२ गते) बिहान अचानक मेरो मोबाइलमा घन्टी बज्यो। उठाएँ। मेरो आदरणीय दाइ (भान्दाइ र उहाँ मेरो आदरणीय गुरु पनि हुनुहुन्छ) शारदा धितालले फोन गर्नुभएको रहेछ। उहाँले एउटा लेख देऊ न भन्नुभयो। म अक्क न बक्क परें। के लेखूँ र के बारे लेखूँ भनेर। धेरै बेर सोचें, निधो गरें- आफ्नै बाल्यकालको बारेमा किन नलेख्ने भनेर। अनि कलम रगड्न थालें। शारदा दाइले आफ्नो आमाको अथवा मेरी ठूली दिदीको स्वर्गारोहणको वार्षिक पुण्यतिथि पारेर एउटा स्मारिका निकाल्न लाग्नुभएको रहेछ। त्यसैको लागि भनेर उहाँले मलाई केही लेख्न भन्नुभएको थियो। मेरी दिदी आज हामीमाझ हुनुहुन्न। तापनि उहाँले दिनुभएको माया र प्रेरणास्वरूप दिदीकै सम्झनामा यो लेख समर्पित छ।

मेरो जन्म गोरखा जिल्लाको उत्तरी भेगमा पर्ने सुन्दर पाँचखुवा देउरालीमा भएको हो। मेरो गाउँलाई म यस अर्थमा सुन्दर भनिरहेको छु कि जहाँबाट चाँदी झैं टल्कने सुन्दर हिमालहरू गणेश र हिमालचुली देखिन्छन्। यही हिमालको काखमा रहेको मेरो गाउँलाई सुन्दर भन्दा अन्याय भएजस्तो लाग्दैन।

म एउटा संयुक्त परिवारमा हुर्केको हुँ। मलाई मेरी आमाले घाँस काट्दा काटदै पाउनु भएको रे। मलाई जन्म दिएपछि मेरी आमा धेरै बिरामी हुनुभयो रे। मलाई दुध खुवाउन पनि सक्नु भएनछ। मेरी ठूलीआमाले मलाई दुध खुवाउन गाउँघरतिर लानुहुन्थ्यो रे। यी सबै कुरा मैले बुझ्ने भएपछि मेरी हजुरआमा साथै फुपु दिदीहरूले बताउनुभएको हो।

म सानैदेखि सोझो थिएँ रे। सानोमा धेरै मोटो भएकोले मलाई पहलमानी सिकाउनु पर्छ भन्नेहरू धेरै थिए भन्ने सुनेको हुँ। म मेरो बुवाआमाको सोझो छोरा। हुजरबा-हजुरआमाको सोझो नाति, दाइहरूको सोझो भाइ। फुपुदिदीहरूको सोझो भदाहा र आफन्तजनको सोझो मान्छे। बाल्यकालका सबै घटनाहरू मेरो मानसपटलमा जस्ताको तस्तै सम्झना त छैन, तर जति सम्झना छ र मेरा आदरणीयहरूबाट जे सुनें, त्यसैलाई शब्दमा उतारिरहेछु।

म सानैदेखि सोझो स्वभावको थिएँ र अहिले पनि सोझो नै छु। मैले आफ्नो बारे आफैं भनेको भन्दा पनि परिवारजनबाट सुनेको कुरा हो यो। हाम्रो परिवार संयुक्त परिवार थियो। हाम्रो घरमा हजुरबुबाको दिदी पनि हुनुहुन्थ्यो। उहाँले नै भान्साको काम सम्हाल्नुहुन्थ्यो। त्यसैले म उहाँलाई 'भान्से आमै' भन्ने गर्थें। उहाँ मलाई अति धेरै माया गर्नुहुन्थ्यो। त्यसैले उहाँ एक्लै पर्ने डरले म धेरै टाढा जान पनि रूचाउँदिन थिएँ। म उहाँलाई छोडेर आफन्तको घरमा जान्नथिएँ। आमासँग मामाघर धेरै जान्नथिएँ।

कहिलेकाँही मेरी फुपु दिदीहरूले आफ्नो घर जाने आग्रह गर्दा पनि आमै एक्लै पर्नुहोला भनेर जान मान्दैन थिएँ। मेरो ठूलो फुपु (जो हाल हाम्रोसाथ हुनुहुन्न र उहाँको सम्झनामा केही शब्द कोर्ने प्रयास गर्दैछु) ले आफ्नो घर जाने आग्रह गर्दा पनि म भन्ने गर्थें कि मेरो भान्से आमै एक्लै पर्नुहुन्छ। अनि ठूलो दिदीले मेरो प्रशंसा गर्दै भन्नुहुन्थ्यो- यो भाइ साह्रै सोझो छ। अनि





म मख्ख पर्थें । उहाँ मेरो सधैं प्रेरणाको स्रोत बन्नुभयो । जहाँ र जहिले पनि मेरो सोझो भाइ भनेर प्रशंसा गर्नुहुन्थ्यो र असल मान्छे बन्नको लागि आशीर्वाद दिनुहुन्थ्यो । उहाँ मलाई बडाहाकिम भएस् भन्नुहुन्थ्यो ।

मेरो बुबा पहिलेदेखि नै राजनीतिमा संलग्न हुनुभएकोले त्यसबेलाका जिल्लादेखि अञ्चलसम्मका ठूला सरकारी कर्मचारी गाउँ भ्रमणमा आउँदा बास बस्ने हाम्रो घर थियो । उनीहरूलाई दिइएको सम्मान देख्दा पछि गएर म पनि यस्तै बन्छु भन्ने लागेको थियो ।

मैले गाउँकै शैलपुत्री प्रा.वि. (हाल उच्चमावि) बाट तीन कक्षा पास गरेपछि चार कक्षा पढ्न अलि टाढा घ्याम्पेसालको दुल्लभ माविमा जान थालें । मेरा भान्दाइहरूले पनि त्यहाँ पढाउनुहुन्थ्यो । अधिकांश गुरुहरू मेरा आफन्त पर्नुहुन्थ्यो ।

भान्दाइहरू होमनाथ र शारदाले पनि मलाई पढाउनु हुन्थ्यो । शारदा दाइको पढाउने उत्कृष्ट शैली मलाई अहिले पनि याद छ । कक्षामा पस्नेबित्तिकै पहिलो दिन पढाएको कुरा सोध्ने शैली मलाई विशेष मन पर्थ्यो । पछि म पनि शिक्षक बन्छु र यो शैली अपनाउँछु भन्ने लाग्थ्यो । हुन त म अहिले शिक्षक नै छु र मेरो आदरणीय गुरु शारदा दाइको शैली अपनाउने गर्छु । भलै, कहिले सफल भए हुँला तर पनि म आफूलाई अझ निखार बनाउदै अघि बढ्दैछु ।

आज मेरी आदरणीय दिदी (फुपु दिदी) हामीमाझ हुनुहुन्न । तर उहाँले दिनुभएको प्रेरणा मसँग जीवितै छ । उहाँ मेरो सम्झनामा सधैं रहनु हुनेछ । दिदी बिरामी भएर बुद्धनगरको हेम्स अस्पतालमा भर्ना भएको सुन्नेबित्तिकै म भेट्न पुगेको थिएँ । दिदीको आँखाको ज्योति केही वर्षपहिले नै गुमिसकेको थियो । दिदी र मेरो भेट नभएको पनि धेरै नै भएको थियो तर पनि मैले बोलाउनेबित्तिकै 'मेरो भाइ' भनेर मुसार्न थाल्नुभयो र खुसी हुनुभयो । उहाँको उमेर ८७ वर्ष पुगिसक्दा पनि उज्यालो अनुहारकी मेरी दिदीको स्मरणशक्ति उस्तै थियो । मैले कल्पना पनि गरेको थिइनँ- मेरो यो भेट नै अन्तिम हुनेछ भनेर । उहाँले बोलाउनुभएको 'मेरो भाइ' भन्ने शब्द नै मसँगको अन्तिम शब्द हुनेछ भनेर । तर विधिको विडम्बना भनौं या प्रकृतिको नियम, जन्मपछिको मृत्यु नै यो संसारको नियम हो ।

अन्त्यमा, मेरी आदरणीय ठूलो फुपुदिदी आज हामीहरूमाझ नभए पनि उहाँको प्रतिबिम्ब सधैं ताजै रहनेछ । उहाँले भन्ने गर्नुभएको 'मेरो सोझो भाइ' र 'तँ ठूलो मान्छे भएस्' भन्ने आशीर्वाद अझै पनि कानमा गुञ्जिरहेछ । म ठूलो मान्छे त हुन सकिन तर पनि मेरा आदरणीयहरूको इज्जतमाथि आघात पुग्ने गरी नराम्रो काम अहिलेसम्म गरेको छैन र पछि पनि गर्नेछैन भन्ने प्रणसहित मेरी आदरणीय फुपुदिदीलाई श्रद्धासुमन अर्पण गर्छु । ❀

# हाम्रो कर्तब्य



**आकृश अम्गाई**

*गर्नुपर्छ हामीले सधैं राम्रो काम*
*छर्नुपर्छ हामीले चारैतिर आफ्नो नाम*
*पर्नुहुन्न कहिल्यै अरुको करकापमा*
*सर्नुहुन्न कहिल्यै पछाडि काममा ।*

*बुढा, बुढी बुबाआमा हाम्रै भर पर्छन्*
*हाम्रै लागि उनीहरू दिनरात काम गर्दछन्*
*काम गर्दा असफल होइन्छ आश मार्नुहुन्न*
*वाआमाको मायालाई निराशा पार्नुहुन्न*

*मिलेर काम गरे एकतामा शक्ति छ*
*हाम्रो छातीभित्र साथी राष्ट्रभक्ति छ*
*राम्रो काम गरेपछि आफूलाई चिन्नु छ*
*ठूलो मान्छे बन्नलाई सही बाटो हिँड्नु छ ।*

*कक्षा-चार*
*श्वेतसदन एकेडेमी, गोङ्गोबु*







# सम्भनाको तरेलीमा ठुल्दिदी



केशरी अम्गाई

सन्दर्भ तिहारको छ । बहिनीको हातबाट टीका नलगाएको पनि चार वर्ष भएछ । चार वर्षपछि तेलको छेको गरेर बहिनीले दीर्घायुको कामना गर्लिन् तर म भने अलिकति अतिततर्फ फर्कदै छु । हुन त मेरो अतितले कसैलाई प्रेरणा दिनेछैन अनि कुनै साहित्यिक महत्व पनि नराख्ला सायद । तर अतित आफूले पाइला टेकेको धरातल हो, आफू हुर्किएको परिवेश । त्यसलाई बिर्सनुको अर्थ आफ्ना अग्रजप्रति, आफ्ना पूर्खाप्रतको अपमान हो ।

सबैका बाल्यकालिन सम्भनाहरू निश्चय नै रमाइला हुन्छन् । भर्खरै सामाजिकरण हुँदै जाँदाको अनुभव आल्लादित हुन्छन् चाहे व्यक्ति जुनसुकै परिवेशमा हुर्केको होस् । व्यावहारिक बोभबाट मुक्त, छलकपट र सांसारिक प्रपञ्चबाट टाढा, आफ्नैखालका बाल संसारको रमाइलोमा रमाइरहेको बाल्यकालीन सम्भना साँच्चै रमाइला हुन्छन् ।

म तिहारकै सन्दर्भमा अतितलाई सम्भदै छु- अलिकति आफ्नै बाल्य संसार र त्यसताकाको परिवेशलाई । म सम्भदैछु अतितका आफ्नै पारिवारिक सन्दर्भहरू र त्यससँग जोडिएका बाल्यकालीन धारणा र अनुभवहरू, विशेष गरी ठुल्दिदी र उहाँसँगका सम्भनाहरू ।

भाइटीका नामाकरण गरिएपनि बहिनीहरूले दाजुहरूलाई टीका लगाउने चलन छ । हाम्रो बाइस जनाको संयुक्त परिवारमा दशैंभन्दा पनि तिहार विशेष रमाइलो हुन्थ्यो । सेलरोटी खान पाइने, अनरसा र भिरायो खान पाइने, दिदीहरूले दिनुभएको मिठाइहरू मुखमा हाल्दै ठूला दाइहरूको पछि लागेर देउसी खेल्दै हिड्न पाइने, आहा ! ती दिनरू !

दुई बहिनी सानै थिए । तिहारमा गर्नुपर्ने सम्पूण कार्य फुपूदिदीहरूले गर्नुहुन्थ्यो । फुपूदिदी भएपनि हामी दिदी नै भन्थ्यौं । वास्तवमा दिदी भन्नुपर्ने तालिम पाएको समयमा दिदी र फुपूदिदी बीचको अन्तर थाहा नै थिएन । हामी फुपूदिदीकै हातबाट टीका लगाउँथ्यौं । दिदीहरू चार जना हुनुहुन्थ्यो र बुबाहरू पनि चार जना तर दुईजना बामात्र जीवित हुनुहुन्थ्यो । जेठाबा र माइलाबा पहिल्यै बित्नु भएको रे । जेठाबाको तर्फबाट एउटी दिदी हुनुहुन्थ्यो तिहारमा उहाँको उपस्थिति पनि विशेष महत्वको हुन्थ्यो । माइलाबाको कुनै सन्तान थिएन, माइलीआमा प्राय: माइतमा नै बस्नुहुन्थ्यो ।

दिदीहरूको नाम थाहा थिएन । ठुल्दिदी, पन्द्रुङको दिदी र डाँडागाउँको दिदी भन्थ्यौं । काउलेको ठुल्दिदी, पन्द्रुङबाट दुई जना दिदी आउनुहुने भएकोले ठूलीकान्छी दिदी र सानीकान्छी दिदी भन्थ्यौं र डाँडागाउँ (मैलुङ) को दिदी माइली दिदी हुनुहुन्थ्यो ।

दिदीहरूलाई चिन्ने भएपछि मेरो बाल हृदयमा एउटा रहस्य जन्मिएको थियो- 'पन्द्रुङको दुईवटा दिदीहरू एकैठाउँमा किन विवाह गरियो होला ?' त्यतिखेर लाग्थ्यो उहाँहरू एउटै ठाउँ तर अलग-अलग घरको हुनुहुन्छ । अनि लाग्थ्यो- 'ठूलीकान्छी दिदी सधैं एक्लै आउनुहुन्छ, भिनाजु चाहिँ किन









नआउनुभएको होला ?' जब ठाउँमात्र होइन, उहाँहरू एउटै घरमा हुनुहुन्छ भन्ने थाहा पाएँ त्यो रहस्य झन चुलियो- 'एउटै घरमा किन विवाह गरिदिएका होलान् ?' विवाहको अर्थ पनि राम्रोसँग नबुझेको त्यस समयमा उब्जेको त्यो जिज्ञासा कसैको अगाडि पोख्न सकेको थिइन । त्यसको धेरै पछि मात्र ठूलीकान्छी दिदी बाल विधवा भएको थाहा भयो ।

हजुरबुबा भानुभक्तको स्वर्गे हुँदाको घटनाको स्पष्ट याद छैन तर उहाँसँगका मधुरो बाल सम्झना मसँग अझै पनि ताजत छन् । गोरो अनुहार, अग्लो दारपातको, प्रांयः फेता गुथ्नुहुने, दौरा सुरुवालको पहिरनमा उहाँ हरक्षण गाई भैंसीको स्याहारमा लागेको देखिनु हुन्थ्यो । उहाँको बुढी दिदी हुनुहुन्थ्यो हामी कहाँ बस्नुहुने, हामी उहाँलाई फुपूआवै (फुपू हजुरआमा) भन्थ्यौं । हजुरबाले उहाँसँग टीका लगाउनु भयो कि भएन याद छैन । हजुरबा जीवित छउन्जेल तिहारमा सबै दिदीहरू जम्मा हुनुहुन्थ्यो । अझ तीजमा त काउले र डाँडागाउँको भान्जीदिदीहरू पनि जम्मा हुनुहुन्थ्यो । दर खाने दिन रातभर कृष्ण र राम लीलाका कथाहरू तीजको लयमा गाइएर नाचगान हुन्थ्यो । कति रमाइला थिए ती दिनहरू !

तिहारमा ठुल्दिदी विशेष आकर्षणको केन्द्र हुनुहुन्थ्यो । घरको परिवारले मात्र हाइन गाउँका अरु मान्छेहरू आउँदा पनि उहाँप्रति बढी श्रद्धा गरेको देख्दा यस्तो लाग्थयो- 'सायद उहाँ विशेष हुनुहुन्छ ।' उहाँलाई सबैले त्यसरी सम्मान गरेको देख्दा उहाँलाई विशेष मान्नु पर्ने रहेछ भन्ने भावनाले मेरो बाल हृदयमा जरो गाड्दै गएको थियो भने उहाँको मसिनो तर मीठो बोली र मायालु हातको स्पर्शले उहाँप्रति समर्पित गराउँथ्यो मलाई ।

त्यस समयमा हाम्रो गाउँ गुम्दा, लाप्राक, प्रो, छेक्म्पार जस्ता उत्तरी क्षेत्रलाई सदरमुकाम गोरखा बजारसँग जोड्ने प्रमुख पैदल मार्ग थियो । जनैपूर्णिमापछि दशैंका लागि चामल किन्न र आफ्ना उत्पान अन्नसँग साट्न हिड्ने लेकका मान्छेहरूको ताँती लाग्थ्यो । यो क्रम हिउँदमा झन बढी हुन्थ्यो । हाम्रो घर वासस्थानको केन्द्र हुन्थ्यो । तीस चालीस जना मान्छहरू वास नबसेको दिन हुदैनथ्यो । उनीहरू वास बसेपछि आलु र टुसा दिएर जान्थे । तिनै अपरिचित मान्छेहरू मध्ये कतिपयले 'ए ! ठुल्दिदी पनि आउनुभएछ !' जस्ता प्रतिक्रियाले मलाई लाग्थ्यो- 'हैन, यिनीहरूले कसरी चिने हाम्रो दिदीलाई ?'

हजुरबाले घरको कथा सुनाउनु भएको अलि अलि याद छ । घरको पछाडि पट्टि चर्किएको भागको बारेमा जिज्ञासा राख्दा हाम्रो घरको इतिहास हजुरबा र बाले बताउनुभएको थियो । १९८४/८५ तिर बनाइएको घर नब्बे सालको भूकम्पमा चर्किएको थियो जुन अहिले पनि यथावत् छँदैछ । दलान ननिकालिएको, खरले छाएको, बाहिरबाट हेर्दा ठूलो तर बाक्लो गाह्रोको कारण भित्र भने साँघुरो, चुलामा साना साना चौकाहरू बनाइएको थियो । भान्साभित्र खाना खाँदा परिवारको ज्येष्ठताको क्रमको आधारमा माथिबाट तलतिर बस्ने चलन थियो । हजुरबा सबभन्दा माथि कुनामा बस्नु हुन्थ्यो । उहाँ बस्ने ठाउँपट्टिको चौकी आटले छुट्ट्याइएको थियो जसलाई नाघ्ने अनुमति हामी बालकहरूलाई हुदैनथ्यो । साँघुरो घर त्यसमाथि आट र टुक्रा टुक्रा बनाइएकोले झन साँघुरो लाग्थ्यो । ठुल्दिदी आउनुभएको बेलामा खाना खाँदा त्यही आट भित्रको चौकी, हजुरबाको आडमा बसेर खाना खानुहुन्थ्यो । अगेनु पारि झ्यालको आडैमा साँघुरो मुलओच्छयान थियो । 'यो ठूलीलाई मैले त्यही जन्माएकी हुँ ।' हजुरआमा सुनाउनु हुन्थ्यो ।

ठुल्दिदीसँगको चिनापर्ची कसरी भयो स्पष्ट याद छैन । एकपटक दोकाँधे झोला छेउमा राखेर बस्नुभएको एक महिलालाई देखाएर ठुल्दाइले(लोकहरि अम्गाईं) सोध्नुभयो- 'उहाँ को हो चिन्छस् ?' कतैबाट खेलेर फर्कंदा उहाँलाई नमस्कार गरिसकेको थिएँ । दिदीहरू आउँदा, ठूला मान्छेहरू आउँदा नमस्कार गर्नु पर्ने तालिमले त्यो संस्कार सिकाएको थियो । 'दिदी' मैले भनें । 'कुन दिदी ?' उहाँले सोध्नुभयो । मैले टुलुटुलु



दिदीको मुखमा हेरिरहें। वास्तवमा कुन दिदी हो मलाई थाहा थिएन। सायद पहिला पनि चिनाइएको थियो होला तर मेरो बाल मस्तिष्कले त्यसलाई सम्झन सकेन होला। "मेरो बाबु' दिदीले हातमा तानेर टाउको मुसार्नु भयो र मेरो हातमा पिपलमेठ हातमा राखिदिनु भयो। दिदीहरू आउँदा पिपलमेठ (त्यतिखेरको गेडी मिठाई) आशाले पनि म दिदीसँग नजिक हुन खोज्थें।

"उहाँ हाम्रो घरको सबभन्दा जेठी मान्छे, काउलेको ठुल्दिदी।' दाइले चिनाृनु भयो। त्यसपछि उहाँलाई कहिल्यै बिर्सिइएन।

प्रायः उहाँ एक्लै आउनुहुन्थ्यो देउरालीमा। कहिलेकाही मात्र भिनाजु साथमा हुनुहुन्थ्यो। बिशेष गरि हजुरबाको समयमा दशैंको टीका थाप्न सँगै आउनु हुन्थ्यो। दिदीसँग परिचित भएपनि उहाँसँग परिचित थिइन। अग्लो र राता राता आँखा भएको भिनाजुलाई देखेर निकै डर लाग्थ्यो। शुरुमा अपरिचित हुनाले नौलो लाग्थ्यो। बाल स्वभाव, अपरिचितसँग नजिकिने कुरै थिएन। उहा आउँदा खाटमा राढी ओछ्यइन्थ्यो र खाजाको लागि सेल पकाइन्थ्यो। मलाई भने घरभित्र भएमा बाहिर निस्कन नपरे हुन्थ्यो भन्ने लाग्थ्यो। बाहिर खेल्न लागेको भए अलि पर पर हुन्थें। एकपटक उहाँले भन्नुभयो- "ए यता आएर बस्।' उहाँले आफू नजिकैको ठाउँमा थाप मार्नुभयो। भोलिको ससुराली खेल्ने तैं होस्, किन जङ्गली बन्छस् हँ ?' उहाले हकार्नु भयो। म डर र धक मान्दै उहाँको आडमा बसें। भित्रबाट बाहिर निस्कदा म पक्राउ परेको थिएँ । सायद उहाँको ठूलो स्वरका भएका कारण हकारेको जस्तो लागेको लागेको थियो होला तर त्यो स्वरमा पनि माया र अपनत्वको भाव महसुस गर्दै थिएँ म। 'तैंले भिनाजुलाई चिनेको छस् ?' ठूलोबुबाले सोध्नुभयो।

"अहँ !' मैले इन्कारीको मुन्टो हल्लाएँ।

"काउलेको ठुल्दिदीलाई चिनेको छस् ?' ठुल्दाइले सोध्नुभयो। 'चिन्छु' मैले स्विकृतिको टाउको मात्र हल्लाएको थिएँ। सायद भिनाजुको डरले म भित्र भित्रै खुम्चिएको थिएँ त्यसैले मेरो बोली फुटिरहेको थिएन। "हो त्यहाँको भिनाजु, हामी सबैले मान्नु पर्ने, हामी सबैभन्दा माथिको मान्छे।' दाइले नै चिनाउनु भयो। "फेरि अर्को चोटी आउँदा पनि बिर्सेलास् नि !' भिनाजुले भन्नुभयो। म मौन रहें अनि भित्र भित्रै खुम्चिएर बसिरहें। त्यसपछिका दिनहरूमा उहाँको परिचय त बिर्सिन तर मनको डर भने धेरैपछिसम्म कायम थियो।

"एइ ! मलाई चिन्छस् ?' एकदिन दिउँसोको समयमा लौरो टेक्दै आइपुग्नुभएको भिनाजुले सोध्नुभयो। "चिन्छु।' मैले भनें। 'भन् त को हुँ ?' उहाँले सोध्नुभयो। "काउलेको भिनाजु।' मैंले डराइ डराइ भनें। 'ए ! बिर्सेको रहेनछस्।' उहाँले भन्नुभयो। "म कहाँ तिमीहरू आउँदैनौ, म बुढो मान्छे तिमीहरूहलाई भेट्न आउनुपर्छ।' उहाँले जिस्क्याउनुभयो। 'तपाईं पनि त आउनुभएन नि दशैंमा।' खै कुन साहस बटुलेर मैले सायद घुर्की लगाएँ। "सालोको हातबाट कसैले टीका लगाउँछ ? तेरा बाहरू मेरा साला हुन्।' उहाँले भन्नुभयो। सायद माघेसक्रातिको लागि खसी खोज्न आउनुभएको थियो उहाँ। 'अनि दिदी खै त ?' सायद मेरो औपचारिकताको प्रश्न थियो। तेरो दिदीलाई ल्याएर घर कसले कुरदिन्छ ? उहाँले भन्नुभएको थियो। म चुप लागें। यो प्रसङ्ग म सात आठ वर्षको हुँदाको थियो होला सायद।

यसको २८/३० वर्ष पछि हाम्रो परिवारको तिनै मूल हाँगो ठुल्दिदीको(हस्तकुमारी) मृत्युको खबरले एउटा नमीठो पिडा भरको लागी छाडेर गएको छ। मृत्यु प्राकृतिक हो, त्यसमा विस्मात गर्नुको अर्थ छैन तर तिनै बुढी दिदीसँग भेटने अभिलासालाई समयमा पूरा गर्न नसक्दा बेग्लै नमिठो अनुभव हुँदोरहेछ। त्यसमाथि "सबैलाई देखियो त्यो कैशरीलाई देख्न पाइएन।' आमाले सुनाउनुभएको दिदीको शब्दले काउले र ठुल्दिदीको प्रसङ्ग चल्दा सधैं मनमा कतै चिमोटी रहन्छ। तिहारको यस सन्दर्भमा मलाई त्यही कुराले चिमोटिरहेको छ। ❀







# श्रद्धाञ्जली माइतीघरबाट



होमनाथ अम्गाई

उत्तरमा सुलीकोट, दक्षिणमा तन्द्राङ्गकोट, पूर्वमा आरुकोट र पश्चिममा ताकूकोटको वीचमा समुद्र सतहबाट करिब २४०० फिट उचाइएमा अवस्थित पाँचखुवा देउराली गाउँ क्षितिजमा मनासलु र गणेश हिमाल बोकेर धार्चे डाँडाको काखमा थुपुक्क वसिरहेको छ। गोरखा जिल्ला सदरमुकामबाट २४ कि.मि. उत्तर तिर पर्ने यस गाउँका वालुवा, ढोडेनी घडेरी गाउँ, धारापानी, देउराली, मुलाबारी, अमले, पोखरी, ग्याजी र गुर्दुङ जस्ता स- साना गाउँहरुको संगम हो। धार्चे लेकबाट उद्‌गमव भई अविच्छिन्न रुपमा वगिरहेकी स्तुल खोला यस गाउँको प्रमुख जलसम्पदा र ऐतिहासिक ग्याजी तामाखानी, जसको उत्खनन हुन सकेको छैन, अर्को खनीज सम्पदा हो। वहुजातिय सद्‌भाव र सम्मानको अनुपम नमूना यस गाउँमा व्रामण, क्षेत्री, गुरुङ, वरामु, नेवार कामी र सार्की जातिको बसोसास छ, भने उत्तम खेती मध्यम व्यापार निर्घिणी चाकरी भनिने जमाना देखि कृषि नै गाउँको प्रमुख पेशा भए पनि परम्परा गत कृषि प्रणाली र पशुपालनबाट आजित गाउँको नयाँ युवा पुस्ता अध्ययन र व्यवसायको लागि शहरतिर र अझ वैदेशिक रोजगारतर्फ पनि उत्प्रेरित भइरहेका छन्।

२०१७ सालमा स्थापित एउटा प्राथमिक विद्यालय मात्र भएको यस गाउँमा हाल तनि वटा प्राथमिक र एउटा उच्च माध्यमिक विद्यालय संचालित छन्। जिल्ला सदरमुकाम पोखरी थोक बजारबाट बाट हरियाली सडकले जोडिएको यस गाउँ मोटर सुविधाको अन्तिम गन्तव्य बनेको कारण राम्रो पर्यटकीय स्थल तथा व्यापारिक केन्द्र समेत बनेको छ। दैनिक एक दर्जन ठूला गाडीहरु ओहोर दोहोर गर्नुका साथै हजारौ मानिसहरुको आवात जावत हुने यस ठाँउमा नाम सुनेका जोकोहीलाई पनि एकपटक पुगुँ पुगुँ लाग्ने बनेको छ। पेगोडा शैलीमा बनेका पुराना गाउँले घरहरुको अवलामा छिट्टपुट्ट रुपमा आधुनिक पिलरवाला घरहरु समेत बन्न थालेका छन्।

हुनत यस लेखको उद्देश्य देउरालीको साङ्गो पाङ्गो चित्रण गर्नु नभई एउटा सानो पृष्ठभूमी तयार गरेर नितान्त पारिवारिक तथा भावनात्मक सम्वन्धको सन्दर्भ जोड्ने जमर्को मात्र हो। विक्रमको सोह्रौ शताब्दीको शुरुतिर नेपालको पश्चिम पहाडमा अवस्थित खसान क्षेत्रबाट पूर्व लाग्ने क्रममा पश्चिम २ नं. को विभिन्न भू-भागका साथै तान्द्राङ्गमा वसोवास गर्दै आएका कौशिक गोत्रीय अंगाई वन्धहरुको केही सदस्यहरु अठ्ठारौं शताब्दीको मध्यतिर तान्द्राङ्गबाट वसाई सरी यस देउराली गाउँमा वसोवास गर्न थालेका हुन्। अहिलेको किशोर पुस्ता समेत गणना गर्दा छ पुस्ता देखि यस गाउँको वडा नं. १, ३ र ५ मा वसोवास गर्दै आएका अम्गाई वन्धुहरु यस गाउँबाट पछि विस्तारै देशको अन्य भू-भागमा समेत वसोवास गर्न थालेका छन्।

हुनत संसार एउटा गाउँ जस्तो बनेका वर्तमान भू-मण्डलीकृत विश्वमा कुनै निश्चित भूगोल, भाषा, धर्म र संस्कृतिको मात्र बखान गर्नु त्यति युक्ति संगत त नदेखिएला तथापि आ-आफ्ना पारिवारिक संरचना सुगम ढंगबाट जानकारी होस् भन्ने हेतुले यो संक्षिप्त पारिवारिक परिचयसहित निम्न वृक्षचित्र उल्लेख गरिएको छ।




प्रस्तुत वृक्षचित्रमा उल्लेख गरिए अनुसार बलभद्र अंगाईका पाँचभाइ छोराहरु मध्ये जेठा काशीनाथ, माहिला जयनरायण र साहिला लोकनाथ का परिवार देउरालीमा मात्र करिब ३० घर धुरीको संख्यामा अध्यावधिक छन् भने काइला र कान्छाका छोराहरुको परिवार तान्द्राङ्ग गा.वि.स. वडा नं. ७ मा बसोवास गरिरहेका छन् ।

पितृ प्रधान संस्कारले हो अथवा अन्य कुनै कारण वश यस वृक्ष चित्रमा चाहँदा चहदै पनि आधा संसार चेलीहरुको पारिवारिक विवरण जुन अत्यन्त सान्दर्भिक र आवश्यक हुँदा हुँदै पनि उल्लेख गर्न नसकिएकामा हामीलाई दु:ख लागेको छ । छोराहरुको वंशावली विवरण तयार गर्दा दिदी बहिनी तथा छोरीचेलीहरुको पारिवारिक सम्वन्धको बारेमा पनि उल्लेख गरिनसके साँच्चै आफ्नो वंश- कुलमात्र होइन कुटुम्बहरुको समेत विस्तृत विवरण जुन भावी पुस्तालाई समेत ज्ञानको लागि अत्यन्तै जरुरी दस्तावेज तयार हुने कुरा निर्विवाद छ ।

देउरालीको भूगोल र अंगाई वंशमा जन्मिएर आफ्नो कर्मघर तान्द्राङ्ग काउले स्थित धिताल परिवारमा जीवन विताउनु भएकी हाम्री दिदी **हस्त कुमारी** को स्मारिका प्रकाशन गर्ने र त्यसको लागि सानो संस्मरण लेख्न उत्प्रेरित गर्ने भानिज दाजुहरु विशेषत: शारदा दाइलाई साधुवाद दिवंगत दिदीको वर्ष दिनको पुन्य तिथिको अवसरमा सबै परिवार जनमा समवेदना र दिवंगत आत्माको चीरशान्तिको लागि माइतीको तर्फबाट हार्दिक श्रद्धाञ्जली । ❀







# मेरो सम्झनामा स्व. हस्तकुमारी धिताल

कपिल भट्ट

म मौन स्तब्ध र गम्भीर छु। भावनाहरू अक्षर बनेर छरपस्ट हुन खोज्दा मेरो आँखा आशुले भरियो। साँच्चै यो संसारमा रगतको नाता भन्दा भावनाको नाता साह्रै ठूलो रहेछ। लहरो तान्दा पहरो हल्लिने रहेछ। हाम्री आदरणीया हस्त कुमारी धितालालाई सम्झदा म आज आफैसँग पोखिदै छु। यस धर्तीमा जन्मिएका महिलाहरू मध्ये उहाँ मेरो मन मस्तिस्कमा अविष्मरणीय छाप छाड्ने नारी हुनुहुन्छ। मेरो नाताले उहाँ कान्छी दिदी राधिकाकी सासु भएपनि भावनाले उहाँ मेरी आमा समान ममतामयी र करूणाकी खानी हुनुहुन्थ्यो।

जीवन यादहरूको डायरी हो र मृत्यु त्यसको अन्तिम पाना रहेछ। वि.सं. २०३५ मा जब मेरी दिदी राधिको विहे काउलेको धिताल परिवारमा भयो त्यसवेला देखि मैले उहाँलाई चिन्ने अवसर पाएको हुँ। म विद्यालय जाने बाटोमा नै उहाँको घर थियो। विद्यालय जादा र फर्कदा म कहिले कांही उहाँको घरमा पस्ने गर्दथे। मलाई याद छ ती दिनहरू जब उहाँ मलाई आफ्नो छोरा सम्झी मिठा मिठा खानेकुरा दिनुहुन्थ्यो। भिनाजु शारदा मैले पढ्ने विद्यालय दुल्लभ माध्यामिक विद्यालयको शिक्षक हुनुहुन्थ्यो। मेरी दिदी माइती आउदा सधै भन्ने गर्नुहुन्थ्यो कि मेरी सासु त देवी समान हुनुहुन्छ। दिदीका ती शब्दहरू मेरो अन्तष्करणमा अझै पनि ताजा नै छन्।

दिदीले आफ्नो सासुको बारेमा भन्नुभएका बाक्यहरूले मलाई सधै झकझक्याई रहन्छ। घरमा कसैलाई ठूलो स्वरले कराउनु हुन्न , कसैलाई अपशब्द प्रयोग गर्नु हुदैन भन्ने ती बाक्यहरू मेरो मनमा जीवन्त छन्। उहाँ सधै भन्नुहुन्थ्यो तरकारी मिठो नुनले मान्छे मिठो गुनले। मेरी दिदीलाई माइतिको आमा र घरको सासु उत्तिकै प्यारो लाग्थ्यो। जीवन संघर्ष हो। संघर्ष मै रम्न सक्नुपर्दो रहेछ। काठमाडौमा संघर्ष गर्दै पढाई अगाडी बढाउदै थिए। म चाडवाडमा घरजाने क्रममा राती उहाँको घर पुगेको बेला उहाँले मलाई खाना पकाएर नै खुवाउनु हुन्थ्यो। सासुआमा केहि वर्षअघि दुवै आँखा नदेख्ने हुनु भयो। तयसपछि भिनाजुले काठमाडौ स्थित पेप्सीकोलाको घरमा ल्याएर राख्नुभयो। मेरो वसाइपनि पेप्सीकोला नजिकै कोटेश्वरमा छ। म उहाँलाई प्राय प्रत्येक शनिवार भेटन जान्थे र मेरो स्वर सुन्ने वित्तिकै उहाँ मेरो हात समाउनुहुन्थ्यो र उहाँकै कारणले मलाई वारम्बार त्यहाँ जान मन लाग्थ्यो।

विसं २०६६ साल मंसिर महिनामा उहाँ विरामी पर्नुभयो। उहाँलाई बनेश्वर स्थित एक अस्पतालमा भर्ना गरियो। म प्राय दिनको एकपटक अस्पताल पुग्थे। भर्ना भएको केही दिनमा अकस्मात भान्जा सुदर्शनले मलाई फोन गरेर बोलाउनुभयो। मेरो मनमा चिसो पस्यो। म मेरी श्रीमती विन्दा सहित ट्याक्सी लिएर हतार हतार अस्पताल पुगें। अस्पताल पुगदा उहाँको देहावसान भईसकेको रहेछ। स्वर्गारोहण भएपनि उहाको अनुहारमा अलौकीक उज्यालो थियो र नाकमा फुली झल्कीरहदा शरीरमा लगाएका राता लुगाले उहाँको निश्प्राण शरीर सजिव जस्तै देखिन्थ्यो। ती दृश्य मेरो आखामा पर्ने बित्तिकै अनायसै आखाबाट आसु झर्न थाले।

सम्झनाको सागरमा यादहरू छाल बनेर आउदै कहिले एउटा किनारमा पुगिन्छ, कहिले अर्को किनारमा। तर जुन किनारमा पछारीए पनि स्वर्गीय हस्तकुमारी धितालको याद भने मानसपटलमा जीवित छ। मेटेर नमेटिने, पढेर नसकिने एउटा ब्यक्तित्वको छायाले मलाई अघि बढ्न प्ररित गर्दछ। भावनाहरू मडारिएर वादल झै वर्षन थाल्छन्। उहाँको ब्यक्तित्वलाई शब्दमा कैद गर्न म असमर्थ छु। मेरो लागि सधै अमर हुनुहुनेछ।









# हजुरआमाप्रति...



विमला भट्ट (उपाध्याय)

समय पनि कति चाँडो बित्दो रहेछ विदेशमा कामको व्यस्तताले गर्दा होला, मेरो प्यारी हजुरआमाको स्वर्गारोरण भएको पनि एक वर्ष बितिसक्दा पनि पत्तै भएन। हुनतः उहाँलाई मैले अन्तिम अवस्थामा भेट्न पाइन त्यही भएर पनि होला मलाई अहिलेसम्म पनि उहाँ काठमाडौं सिनामंगल मामा घरको खाटमा हजुरबुवासँगै बसेर नाति-नातिनाहरूको गफ सुनेर हास्दै बसिरहनु भएको होला भन्ने आभास हुन्छ। तर यर्थाथ नमिठो हुन्छ, मलाई थाहा छ अब उहाँ यस संसारमा हुनुहुन्न, म नेपाल छोडेर आउँदा भेटेर आएको हजुरआमा अब म नेपाल फर्किंदा भेट्न पाउन्न। संसारको चलन नै यस्तै छ, आफ्नो मनलाई आफैंले सम्फाएर बस्न बाध्य हुनुपर्छ। त्यसैले उहाँको वार्षिक पुण्यतिथिको अबसरमा केही शब्द जानी नजानी कोरेर उहाँको सम्फना गर्न पाउँदा पनि म आफूलाई भाग्यमानी महसुस गरिरहेकी छु।

सायद म परिवारको उमेरमा सबभन्दा ठूली नातिनी भएको हुनाले र बारम्बार ममीसँग मामाघर गइरहने हुनाले धेरै नै घुलमेल थिए हजुरआमालगायत सबै परिवारसँग। मामाघर भनेपछि अहिलेसम्म पनि मन रमाइलो हुन्छ, त्यसैले होला उहाँहरूको मैले असाध्यै माया पाएको छु। हुन पनि करिब २ वर्ष लगातार म मामाघरमा हजुरबा हजुरआमासँग नै बसेर पढें। सम्फदा पनि असाध्यै रमाइलो लाग्छ ती क्षणहरू, मेरो प्यारो कौशी जुन हजुरआमाको कोठासँगै जोडिएको थियो, जहाँ म बिहान को ३-४ बजेको जुनको किरणमा उठेर पढ्ने गर्दथे।

त्यति बेला मामाघरमा थुप्रै साना भाइहरू जन्मिएका थिए उनीहरूलाई फोलुङ्गामा हल्लाएर सुताउन मद्दत गर्दथें हजुरआमालाई। तर उहाँ सकेसम्म मेरो सहयोग लिन चाहनुहुन्नथ्यो। सबै काम सकी नसकी आफैं गर्नु, कहिल्लै नथाक्नु, अरूलाई पकाएर ख्वाउन पाउँदा दंग पर्नु उहाँका आफ्ना विशेषता थिए। सबैलाई आफ्नो हजुरआमा अरूको भन्दा असल लाग्छ, तर पनि म गर्वका साथ भन्न सक्छु मेरो हजुरआमा जस्तो सहनसिल, मदुभाषी र क्रियाशील सायद अरू कमै होलान्।

हजुरआमासँग मेरो थुप्रै सम्फनाहरू गाँसिएका छन्, मेरो खुसीमा रमाउने र दुःखमा दुखी हुने मेरो हजुरआमा संसारकी सबभन्दा प्रीय हजुरआमा हुनुहन्थ्यो। सबै सम्फनाहरू लेख्न त सम्भव छैन तै पनि एउटा उहासँगको सानो प्रसंग म कहिल्यै बिर्सन्न।

कुरा आजभन्दा २५-२६ वर्ष अगाडिको हो, मैले एक दिन हजुरआमासँग सेलरोटी पकाउन सिकाइ दिने आग्रह गरे, सन्जोगबस म मामाघर भएकै बेला सेल पकाउन सुरु गरियो, म सिक्ने तरखरमा उहाँसँगै नजिकै बसेर हेर्दै थिए। उहाँ मलाई सिकाउँदै भन्दै हुनुहुन्थ्यो कि रोटी पकाउँदा एकदम होस गरेर पकाउनुपर्छ, पानीको सानो छिटा परे पनि आगो बलिहाल्छ मात्र के भन्नुभएको थियो मैले अन्जानमा पानीको छिटा पारिदिएछु र हर्वार आगो बालिहाल्यो। हामी जर्याक जुरुक पछाडितिर सर्यौ , धन्न कसैलाई केही भएन माइजुहरू आएर आगो निभाउन सहयोग गर्नुभयो। म कहिल्यै बिर्सन्न यो घटना त्यसपछि हजुरआमा भन्दै हुनुहुन्थ्यो मलाई किभन्दा नभन्दै पानीको छिटा पारेर धन्दै बर्बाद भएन। यही नै हो उहाँले मलाई पहिलो अनि अन्तिम गाली गर्नुभएको त्यो पनि सानो स्वरमा। ❀

*डेनभर कोलोराडो, अमेरिका*









# मीठो सम्झना



भवन भट्ट

नेपालमा हजुआमाको सम्झनामा एउटा स्मारिका निकाल्ने खबर प्राप्त भएको थियो। यहाँको व्यस्तता र कामको चापको कारण समय निकाल्न गाह्रो थियो।

हजुरआमासँग अन्तिम समयमा भेट गर्ने अवसर मैले पाइनँ। तर उहाँको देहावसान हुनुअघि दुई-तीन महिना अघिमात्र उहाँलाई भेटेको थिएँ। उहाँले मेरो शिरमाथि हात राखेर दिनुभएको आशीर्वाद मलाई झल्झली याद आइराखेको छ। मामाघरको सुखद सम्झना धेरै छन् मेरा। हजुरबासँग मामाघर जाँदा त्यहाँको बस्तुभाउले पनि आफ्नो नाम लिएर वोलाएको अनुभूति होस् वा हजुरआमाले दिनुभएको पैसा लिएर पसलमा सामान किन्न गएको मेरो सम्झनामा ताजै छ।

जापानवाट पहिलोपल्ट नेपाल फर्कंदा उहाँको आँखामा समस्या आइसकेको थिएन। मैले ठट्टा गर्दा उहाँले म चामल पोको पार्दिन्छु, लिएर जापान जाऊ भन्नुहुँदा त्यस बेला उहाँको वात्सल्य प्रेम झल्किएको लाग्छ मलाई। उहाँका सबै सम्झना यहाँ लेखेर साध्य पनि छैन। मेरी आदरणीय हजुरआमा अहिले हामीसाथ हुनुहुन्न। तर उहाँको प्रेरणा र मार्गदर्शन हाम्रोसामु छ। उहाँको वार्षिक पुण्यतिथिमा हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछु। ❀

# दिदीको सम्झना



कष्णा अम्गाई



*दिदीको गुण सम्झेर ल्याउँदा यो मन झस्कन्छ*
*बिर्सन पनि कसरी सकुँ, छातिमा चस्कन्छ*
*गाउँको जुन देउराली पाखो बालक जीवन*
*माटोमा बिल्यो फूलमा भुल्दो दिएन रहन*
*छोरा छोरी सबैलाई छाडी जानुपर्ने रहेछ*
*दुनियासामु एउटा बत्ती दैवले हरेछ*
*मनकी धनी सबैका सामु ममता अपार*
*गरीब दुःखी दुवैमा लाग्थ्यो उहाँको नजर*
*अति नै थियो माइतीघर प्यारो र घमाइलो*
*भाइ र बैनी सम्झिएपछि लाग्थ्यो रमाइलो*
*कुलकी ठूली मनकी ज्ञानी ठूल्दिदी ती हाम्री*
*बुद्धिकी खानी नयाँ र नौला युक्तिले क्या राम्री*
*फलेको हाँगो जहिले पनि देख्दछु झुकेको*
*उहाँको देन सुनिन्छ आज बुकी झैं फुलेको*
*जन्मेको ठाउँ माटोको माया रहेछ अपार*
*अम्गाई जात सम्झिएपछि खुसीको असार*
*नाता र गोला कुटुम्बहरू सम्झिनै रहन्छन्*
*दैवको लीला जानु नै पर्छ के गर्नु भन्दछन् ॥*







# हजुरआमाको सम्झना



सीता लामिछाने

बगुवामा जन्मेपनि मेरो बाल्यकाल काउलेमा नै वित्यो । मलाई मेरो घर बगुवा हो भन्ने धेरैपछि मात्र थाहा भएको हो भन्दा फरक पर्दैन । मामाघरनै मेरो घर थियो र मलाई त्यो विशेष प्यारोपनि लाग्दथ्यो ।

म मामाघर बाट टाढा बस्न सक्दिन थिएँ । सवै हजुरबा आमाले मलाई विशेष माया गर्नुहुन्थ्यो । मामा माइजुहरूले पनि मलाई साभ्रा भान्जी भन्नुहुन्थ्यो । म घरमा छु वा मामाघरमा मलाई थाहा पनि हुदैन थियो । मामाघरमा सवै भाइबहिनीहरू म भन्दा साना थिए । मलाई उनीहरूको विशेष माया लाग्थ्यो ।

नढाटी भन्नुपर्दा बगुवामा रहनु भएका मेरो बुवा आमाको मलाइ धेरै याद आउदैन थियो जति काउलेमा हजुरवा, हजुरआमा, र मामा माइजुहरूको लाग्थ्यो ।

म विहेपछि बस्नेगरेर काठमाडौं आएँ । काउलेको मामाघर बाट अलिक टाढा भएँ । तर काठमाडौंमा मामाघरबाट नजिकै बस्न थाँले । पेप्सीकोलामा पहिले र शारदा मामा र भाइहरूमात्र हुनुहुन्थ्यो तर पछि माइजु अनि हजुरबा र आमा आएपछि झन रमाइलो भयो ।

म नियमित जस्तो हजुरआमालाई भेटन आउने गर्थे । हजुरआमाको आँखा कमजोर भइरहेको थियो । उहाँ कम देख्न थाल्ने भईसक्नु भएको थियो । म आफ्नो काम परेर पेप्सीकोला मामाघर जान केहि दिन ढिला भएपनि हजुरआमाले चिन्ता गर्नु हुन्थ्यो । म जान एक दिन ढिला भएपनि छोरी विरामी भई अथवा नाति, नातिना विरामी परे कि भनेर सोधि राख्नु हुन्थ्यो । हजुरआमाले कि फोन गर अथवा कि पुगेर आउभनेर माइजुहरूलाई भन्नु हुन्थ्यो भनेर माइजुहरूले भनि राख्नु हुन्थ्यो ।

उहाँ आँखा देख्नु हुदैन थियो तर छामेर हात समातेर हामीलाई अर्ति दिइराख्नु हुन्थ्यो । मेरी छोरी कमजोर भएर हो वा के भएर हो उसको बारेमा विशेष सोधखोज राखी राख्नु हुन्थ्यो ।

एक दिन विहानै म र मेरो श्रीमान मामाघर गयौं । श्रीमान विदेश जाने दिन थियो । हजुरवा र आमासँग आर्शिवाद मागेर फर्कियौं । हजुरआमा विरामी हुनुहुन्न थियो । आरामनै हुनु हुन्थ्यो ।

त्यसको एक,दुई दिनपछि हजुरआमा अलिक विरामी हुनुभएछ । सायद नुहाउदा चिसो लाग्यो वा के भयो । त्यसपछि अलिक विरामी हुदै जानु भयो, कम भएन् । एकदिन एक्कासी अलिक बढी गाह्रो भएछ, शारदा मामाले फोन गर्नु भयो । हामी सवैले राती हजुरआमालाई कुरेर वस्यौं । विहानीपख उहाँलाई अलिक कम भयो र केही बोल्नु भयो । हजुरवाको बारेमा मामाहरूको बारेमा, हामी सबैको बारेमा । सवैलाई आशिष दिनु भयो । सुरूमा पानी निल्न गाह्रो भएपनि पछि सुप खुवायौं, थोरै खानु भयो ।

उहाँ आफ्नो कारणले अरूले दुःख नपाउन भन्ने चाहनु हुन्थ्यो । विरामी परेर परिवारले दुःख नपाउन भन्ने उहाँको सोचाई थियो । त्यसदिन म वच्चाहरू छोडेर आएको थिएँ । त्यसैले विहान घर फर्कें । विहान, ९, १० बजेतिर हजुरआमालाई अस्पताल लगिएको थियो । साना बच्चाको कारण मैले अस्पताल पुगेर हजुरआमालाई फेरि भेट्न पाइन । उहाँ आउने प्रतिक्षामा, फर्किने प्रतिक्षामा प्रत्यकदिन मामाघर आइराखेको हुन्थें । तर हजुरबा र म हुन्थ्यौं । हजुरआमा घर फर्कने मेरो आशा कहिल्यै पुरा भएन । उहाँ त्यतैवाट हामीलाई कहिल्यै नफर्कनेगरेर जानु भयो । उहाँ लाई अस्पतालमा भेटन नपाउँदा आजपनि आफुलाई दुःखी ठान्छु । तर समयसँग कस्को के लाग्छ र भनेर चित्त बुझाउँछु । मेरो जस्तो असल हजुरआमा सबै नाती नातिनाले पाउन । मेरो उहाँ प्रति हार्दिक श्रद्धाञ्जली । ❀









# शीर्षकबिनाको सम्भना



सुलोचना धिताल

समय आफैंमा बलवान् हुन्छ । यो आफ्नै गतिमा दौडिरहन्छ, त्यसैले होला जिन्दगी पनि समयरूपी नदीको बहावसँगै अनवरत् रूपमा बगिरहन्छ । त्यसैले त जिन्दगीको परिभाषा समय र अनुभवसँगै परिवर्तन हुँदै जान्छ । समयको गतिलाई रोक्न मिल्ने भए हरेक व्यक्तिले आफ्नो जीवनलाई मीठो क्षणहरूमा मात्र सीमित राख्ने थिए होला । तर यो सम्भव नभएर नै होला नचाहँदा नचाहँदै कल्पनै नगरिएका नमीठा क्षणहरू समेट्दै जिन्दगीलाई सकिन-नसकी डोऱ्याइरहनुपर्ने ।

मेरी हजुरआमा जसलाई म आमै भनेर सम्बोधन गर्छु सायद दाइ, दिदीहरूले भनेको सुनेर होला । यो नै मलाई नजिक र प्यारो लाग्छ । हाम्री आमैले हामीलाई छाडेर जानुभएको पनि एक वर्ष बितिसकेछ । आज पनि त्यो मंसिर १४ को कहालीलाग्दो र कल्पनै नगरेको क्षण सम्झँदा अनायासै आँखाहरू रसाएर आउँछन् । त्यो क्षणको कल्पनासम्म पनि कसैले गरेको थिएन होला कि यति छिट्टै उहाँले सबैलाई चटक्कै छाडेर हामीबाट यति धेरै टाढा जानुहुन्छ भनेर । अघिल्लो दिन नै त हो मैले उहाँलाई हस्पिटलमा भेट्न गएको, डाक्टरले उहाँलाई अब पहिलेभन्दा ठीक छ एक, दुई दिनमा घर जान सक्नुहुन्छ भन्दा हामी सबै खुसी भएका थियौं । फर्कने बेलामा उहाँले विस्तारै भन्नुभएको थियो-राम्रोसँग जाउ फेरि भेट्न पाइन्छ, पाइदैन । आफूलाई यतिकै हो कि जस्तो लाग्छ । मलाई कताकता नमीठो अनुभव भयो तैपनि मैले भने-बुढी जहिले पनि यस्तै कुरा गर्नुहुन्छ । डाक्टरले सब ठीक छ भन्या छन् त्यही पनि म भोलि बिहान नभए बेलुकी त आइहाल्छु नि । तर त्यो भोलि कहिल्यै आएन । त्यो नै आमैसँगको मेरो अन्तिम क्षण हुन पुग्यो ।

जब म आमैलाई सम्झन पुग्छु उही सानो र पातलो अनि केही सुकेको शरीरसँगै उहाँको उज्यालो र सधैं मन्द मुस्काई रहेको हँसिलो अनुहार नै मेरो आँखा अगाडि आउँछन् । सायद, मैले उहाँलाई जानेदेखि नै त्यही रूपमा देखेकाले होला । मैले आमैसँग त्यति धेरै समय बिताउन नपाए पनि उहाँले अरूको कुभलो चिताएको, अरूको चित दुख्ने व्यवहार गरेको कहिल्यै थाहा भएन । सबैलाई समान व्यवहार, सरल अनि आफूलाई नभए पनि त्यसैमा रमाउँदै अरूको खुसीमा आफ्नो खुसी खोज्ने मेरी आमैप्रति म बढी नै प्रभावित भएर होला मैले उहाँका कुनै दोष र अवगुण भेट्न सकिनँ । भनिन्छ, गुण र अवगुण त प्रत्येक व्यक्तिमा हुन्छ तर यो मानव विशेषता नै हो कि मृत्युपर्यन्त उसका दोष, अवगुणहरू र ऊ प्रतिका गुनासाहरू ऊसँगै हराएर जान्छन् । र, रहन्छ त केवल ऊसँगका मीठा याद र सम्झनाका क्षणहरू । मेरो नजरबाट मात्र हो भनु भने अजसम्म उहाँलाई नराम्रो मान्ने र नमीठो व्यवहार गर्नुभयो भन्ने मान्छे भेटेको छैन । भनिन्छ, अरूसँग मिलेर बसे पनि सासू र बुहारी कहिल्यै मिल्न सक्दैनन् । त्यसै त सासू कहिल्यै आमासरह बन्न सक्दिनन् र सयौं गुनासा र चिसोपन



एक-अर्काप्रति रहिरहन्छ । तर मेरी आमैप्रति उहाँका बुहारी-मेरा आमाहरू) को कहिल्यै केही गुनासा र तीतोपन भएको महसुस छैन मलाई । सरल, शान्त, निष्कपट अनि सबैको भलो चाहने मेरी आमैको जिन्दगीको अन्तिम वर्षहरू उहाँका लागि पीडादायक बन्न पुग्यो । बुढो शरीर त्यसमा पनि दुवै आँखा नदेख्ने, उठबस गर्नसमेत अरूको सहारा लिनुपर्ने भएकाले होला उहाँलाई आफ्नो शरीर आफैंलाई भारी लाग्थ्यो होला अनि भन्नुहुन्थ्यो-यस्तो मुढो जस्तो जिन्दगी के गर्नु सबैले दुःख पाए बरु मर्न पाए सबैलाई सुख हुन्थ्यो । उहाँको यस्तो अवस्था र पीडा सुनेर नरमाइलो लाग्थ्यो । आमैका लागि केही गर्न सकिनँ भन्ने लाग्थ्यो । सायद परिवारमा सबैले यस्तै नमीठो अनुभव गरे होलान्, तैपनि सबै भन्ने गर्थे- बुढी त्यस्तो पनि कुरा गर्ने हो, हजुर भएर नै त हामीलाई रमाइलो छ । उहाँ हाँसेर टार्नुहुन्थ्यो सायद आफ्नो पीडा, अझै हामीबाट लुकाउन खोज्नुहुन्थ्यौं । उहाँका ती पीडा र जीवनप्रतिको नैराश्यता सबैले महसुस गरे पनि बाँड्न सम्भव नभएर होला उहाँको पीडालाई नदेखे जस्तो गरी उहाँसँगै खुसी भइदिन्थ्यौं । तर अब ती सब केवल सम्झना मात्र हुन् । जन्मपछिको मृत्यु त शाश्वत् नै हो प्रकृतिको नियम नै हो । यो बाट म आफैं पनि टाढा रहन सक्दिनँ । तैपनि मन सजिलोसँग मान्न तयार हुँदैन कि अब हाम्री आमै हामीमाझ हुनुहुन्न भनेर । आज पनि उहाँले सुनाउनुभएका ती श्लोकहरू रेकर्ड गरिएका जिन्दगीका ती तीता मीठा भोगाइहरू, चौरासी गर्दाका ती रमाइला क्षणहरू हेर्दा र सुन्दा लाग्छ उहाँ हामीसँगै हुनुहुन्छ र कहिल्यै एकान्तमा एक्लै बस्दा उहाँका आवाज कानसम्म आएर ठोक्किए जस्तो महसुस भई पछाडि फर्केर हेर्दा लाग्छ उहाँ मेरै पछाडि बसेर हेर्दै हाँसी रहनुभएको छ । सायद उहाँ हरदम हरपल मेरो मन मस्तिष्कमा विराजमान भएर होला मसँग र मेरै वरिपरि हुनुहुन्छ जस्तो लाग्छ । ❀

# मेरो प्यारो गाउँ

-निकिता धिताल

*उत्तरतिर हिमाल छ*
*दक्षिणमा बस्ती*
*चारैतिर हरियाली*
*सधैं खुसियाली*
*सानाठूला गह्राहरू छन् वरिपरि*
*बाबाआमा घुम्छन् सधैंभरि*
*पानी बाटो विस्तार गाउँभरि भयो*
*अब भने काउले गाउँमा विकास हुने भयो*
*घरहरू चिटिक्क छन् ढुंगे जस्ता छाना*
*काउले जाँदा खुसी हुन्छन् घरका बावाआमा*

*पश्चिम हेर्दा माछापुच्छ्रे घ्याम्पेसाल देख्छु*
*पूर्वतिर हेर्दा मैले गणेश हिमाल देख्छु*
*मनास्लु हेरी बस्छ सधैं मेरो गाउँ*
*स्कुल छुट्टी हुनासाथ जान्छु म त गाउँ*
*स्वस्थ खाना, मीठो पानी पाउँछु मेरो गाउँमा*
*सधैंभरि बसुँबसुँ लाग्छ यसै ठाउँमा*

*कक्षा-पाँच*
*मेरिडियन इन्टरनेसनल स्कुल*







# म, आमा अनि हजुरआमा



सविना भट्ट

पारिवारिक भेटघाटका क्रममा छोटो समयका लागि अमेरिका जाने क्रममा म र बहिनीको परिवार सिकागोको होटलमा बसेका थियौं। मलाई त्यो बिहान राम्रोसँग याद छ। सायद बिहानको ४, ५ जति बजेको थियो होला। मेरो मोबाइलमा घन्टी बज्यो, फोन गर्ने नेपालबाट दाइ हुनुहुँदोरहेछ। उहाँले नराम्रो खबर छ, सबै जनालाई खबर गरिदिनुहोला भन्नेबित्तिकै पक्कै पनि हजुरआमालाई केही भयो होला भनेर काँडा जुरुङ्ग फुल्यो, मेरो अड्कल साँचो भयो। हुन त हजुरआमा बिरामी भएर हस्पिटलमा हुनुहुन्छ भनेर खबर थाहा पाइसकेको भएर होला मेरो अड्कल साँचो भएको।

खबर सुन्नेबित्तिकै एकछिन त सबैजना के गर्ने, के गर्ने भयौं, त्यतिबेला सर्वप्रथम मलाई मेरो आँखा सामुन्ने मेरो आमाको अनुहार याद आयो। मैले उहाँलाई सम्झिएँ, के गर्दै हुनुहुन्छ होला यस्तै, यस्तै। पाँच महिना जति अघि मात्र नेपालमा मैले हजुरआमालाई नेपालमा अन्तिमपल्ट भेटेको थिएँ। त्यहीबेला हजुरआमाको अवस्थाबारे राम्रोसँग ज्ञान थियो। अब हजुरआमालाई कहिल्यै भेट्न नपाउने सम्झँदा दुखित त भएँ तर सँगसँगै हजुरआमाको उमेर अनि अवस्था सम्झँदा संसारको नियम अनि सुख पाउनुभयो भनेर चित्त बुझाएँ।

मैले सोचेको थिएँ कि म लगायत सबैजनाले मैले जस्तै सोचेर चित्त बुझाउनुभयो होला भन्ने तर त्यस्तो हुँदो रहेनछ। आमालाई बिर्सन गाह्रो रहेछ, जुन कुरा मैले मेरो आमालाई देखेर थाहा पाएँ।

मेरो आमा, मेरो आदर्श, मेरो सम्पूर्ण संसार। मैले मेरो आमालाई जहिले पनि जस्तो दुःख आइपर्दा पनि विचलित नभइकन अरूलाई एक थोपा आँसु नदेखाई सबैलाई सम्झाइ बुझाइमात्र गरेको देखेको थिएँ। हजुरआमाको स्वर्गारोहणपछि मैले मेरो आमाको आँखामा आँसु देखेको छु। एक प्रकारको एक्लोपन देखेको छु। त्यो पनि एकदिन, एकछिन होइन, हजुरआमाको कुरा सुरु हुनेबित्तिकै प्रत्येक दिन, प्रत्येक क्षण।

मैले अहिले हजुरआमाको स्वर्गारोहणपछि सम्झेको कुरा नमिलेको जस्तो लाग्छ। सबैले चित्त बुझाउनु हुन्छ होला भनेर मैले गरेको टिप्पणी सत्य नै होला तर मैले त्यो त्यति सजिलै भन्न हुँदैनथ्यो होला। कुनै दिन म आमा भएर मेरी छोरीले मलाई 'संसारको नियम हो, बिर्सन सक्नुपर्छ' भनि सम्झाए पनि पक्कै पनि मैले मेरो आमालाई बिर्सन सक्दिनँ होला।

मलाई साँच्चै नै भन्नुपर्दा सानो बेलामा आमा नगएका बेलामा मामाघर जान त्यति मन पर्दैनथ्यो। म धेरै मामाघर नजाने भएर होला कहिलेकाहीँ गएको बेलामा मलाई जिस्काउन मेरो धेरै उपनामहरू हुन्थ्यो जस्तै- मोतीखोलाबाट आएकी भोटिनी, लामा इत्यादि। तर मलाई सबैभन्दा मन पर्ने उपनामचाहिँ समिना थियो र अहिले पनि छ। मलाई मामाघरमा हजुरआमाले जहिले पनि समिना भनेर बोलाउने गर्नु हुन्थ्यो। मैले कहिले पनि मेरो नाम समिना होइन सविना हो भनेर सिकाउने कोसिस पनि गरिनँ। उहाँलाई मेरो नाम सविना भन्ने थाहा थिएन अथवा उहाँलाई समिना भन्न सजिलो लाग्थ्यो त्यो मैले कहिल्यै जान्ने कोसिस गरिनँ।

आज २०६७ साल मंसिर १४ गते। हजुरआमाको स्वर्गारोहण भएको १ वर्ष। हजुरआमा भन्नेबित्तिकै सेतो कपाल, रातो चोली र सारी, सानो कद, गोरो अनुहार, सधैं हाँसिरहने अनि सधैं सकिनसकि यता र उता दौडिरहने चित्र मेरो आँखाअगाडि आइरहन्छ। आज हामीबीच उहाँ हुनुहुन्न। हामीसँग नभए पनि उहाँको यादहरू हामीसँग रहिरहनेछ । एक वर्षको अवधिमा उहाँ जहाँ भए पनि उहाँको आत्माले शान्ति पाओस् भन्दै समिनाको तर्फबाट उहाँलाई हार्दिक श्रद्धाञ्जली ॥





# श्रद्धा र प्रेमकी प्रतिमूर्ति मेरो ठूलीआमा



विनु भट्ट

'श्रद्धावान् लभते प्रज्ञा' अर्थात् श्रद्धाबाट नै आस्था एवं निष्ठा जागृत हुन्छ। मेरी ठूलीआमालाई मैले पहिलोपटक देखेको म सानै छँदा नै हो। उहाँको हँसिलो मुहार मायालु भावनाले बोल्ने मृदुभाषी कर्णप्रिय शब्दले पहिलोपटकमा नै ममा परेको सकारात्मक प्रभाव अहिलेसम्म पनि ताजा नै छ। म स्कुल पढ्दादेखि नै उहाँलाई समय-समयमा भेट्न जाने गर्थें। उहाँसँगको प्रत्येक भेटमा मलाई मेरी आमालाई भेटे जस्तै अनुभूति हुने गर्दथ्यो। म जब बढ्दै र भेट्दै गएँ मेरो उहाँसँगको निकटता श्रद्धा र प्रेमका रूपमा बदलिन गएको भान हुन थाल्यो।

जीवन र जगत्मा भोगिएका घटेका र अनुभूत गरिएका घटनाहरू नै अनुभूति हो। जीवनका भोगाइबारे उहाँसँग भएका कुराकानीका सबै संस्मरण लिपिबद्ध गर्न यहाँ पक्कै सम्भावना छैन। मनमा धेरै पुराना सम्झना एकैपटक ताजा भएर आएका हुन्। त्यसकारण अहिले म ती सम्झनाका विविध पक्षमध्ये मेरो पढाइ र बसाइसँग सम्बन्धित विषयका केही प्रसंगलाई मात्र यहाँ छोटकरीमा राख्ने प्रयत्न गर्नेछु।

मलाई पहिले आफ्नो व्यक्तिगत कुराबाट नै सुरु गर्न मन लाग्यो। कुरा २०५३ साल चैततिरको हो। त्यति बेला २०५३ सालको प्रवेशिका परीक्षा सुरु हुन गइरहेको थियो। म त्यसबेला सूर्यज्योति मावि पाल्खुबाट टेस्ट परीक्षा उत्तीर्ण गरेर प्रवेशिका परीक्षाको तयारीमा थिएँ। त्यसबेला सूर्य ज्योति माविको परीक्षा केन्द्र दुल्लभ मावि घ्याम्पेसालमा परेको थियो। मेरो घर पन्द्रुङबाट घ्याम्पेसाल स्कुल अलि टाढै पर्थ्यो। मेरी ठूलीआमाको घर तान्द्राङ्ग गाविसको काउलेमा पर्छ। त्यो ठाउँ मैले परीक्षा दिने केन्द्रबाट धेरै टाढा छैन। मैले त्यसपछि नजिक पर्ने भएको हुँदा ठूलीआमाको घर काउलेमा नै बसेर नै प्रवेशिका परीक्षा दिने निर्णय गरें। प्रवेशिका परीक्षा सुरु हुन चार दिन बाँकी छँदा म आफ्नो किताब कापी बोकेर पन्द्रुङबाट ठूलीआमाको घर काउलेतिर प्रस्थान गरें।

म त्यहाँ गएपछि ठूली आमाले निकै माया र प्यार गरेर मलाई पढ्न प्रेरणा दिनुभयो। प्रवेशिका परीक्षा बिहान सात बजेदेखि हुन्थ्यो। उहाँले मलाई बिहानै उठेर खाना बनाएर खुवाएर पठाउनु हुन्थ्यो। फेरि दस बजे परीक्षा सकेर गएपछि पनि उहाँले मलाई खाना खुवाएर राम्रोसँग मिहिनेत गरेर पढ पछि ठूलो मान्छे बन्नुपर्छ भनेर हौसला दिनुहुन्थ्यो। जब मेरो प्रवेशिका परीक्षा समाप्त भयो त्यसपछि म ठूलीआमाको घरबाट पन्द्रुङ जाने तर्खरमा लागें। त्यसबेला उहाँले मलाई यतै उहाँसँगै बसिदिए हुन्थ्यो भन्ने इच्छा गर्नुहुन्थ्यो। मलाई यति धेरै माया गरेर राख्नुभएकाले मलाई मेरी आमाले जस्तै माया गर्ने आमा पाएकी छु भन्ने पूर्ण अनुभूति मलाई त्यतिखेर भएको थियो। दाइहरूले पनि मेरो पढाइमा विशेष ध्यान दिने गर्नुहुन्थ्यो। ठूलीआमाले स्कुलबाट घर आइपुग्दा मेरा लागि भनेर बनाउनुभएको खाजा र मीठो गरी पकाउनुभएको खानाको स्वादको याद आज पनि मेरो मनःमस्तिष्कमा ताजै छ।

मेरो पढाइसँगै जीवनको व्यावहारिकताका पक्षहरू पनि बेहोर्दै गएँ। हाम्रो हिन्दु संस्कृति, संस्कार र







परम्पराअनुरूपका विभिन्न पर्वमा म सामेल हुने गर्थे । तीज, बुवाको मुख हेर्ने औंशी, मातातीर्थ औंशी जस्ता पर्वहरूमा म सहभागी हुने गर्थें । हरेक मातातीर्थ औंशीमा आमाको मुख हेर्ने दिनमा मैले मेरी आमालाई झैं ठूलीआमाको मुख हेर्न सकेसम्म छुटाइनँ । मैले जानेबुझेसम्म समग्रमा भन्नुपर्दा मेरी ठूलीआमा एउटा कुशल गृहणी, ममताकी खानी मृदुभाषी, हृदयस्पर्शी, आस्थाकी प्रतिमूर्ति एवं प्रेरणाकी स्रोत हुनुहुन्थ्यो । यति मात्र हैन आफ्ना सन्तानका निम्ति निरन्तर चिन्तन गर्ने र हरेक दुःखकष्टमा लागिपर्ने जननी हुनुहुन्थ्यो ।

जब मैले प्रवेशिका परीक्षामा सफलता हासिल गरें त्यो क्षण मेरी ठूलीआमालाई एउटा खुसीले भरिएको क्षण बन्यो । मेरो विवाह भइसकेपछि म काठमाडौंतिर आएँ । त्यसको केही वर्षमा ठूलोबुबा, ठूलीआमा पनि काठमाडौं आई दाइहरूसँग बस्न थाल्नुभयो । उहाँहरू पुरानो सिनामङ्गल चोकमा बस्नुहुन्थ्यो । म उहाँहरूलाई भेट्न समय-समयमा जाने गर्थें । ठूलीआमालाई दमको समस्या थियो । दमले बेलाबेलामा दुःख दिइरहन्थ्यो । २०६६ साल मंसिर महिनाको समय थियो । केही चिसो बढिसकेको समय थियो । उहाँ उमेरले पनि ८७ वर्षको भई सक्नुभएको थियो । दमले च्याप्दै लगेको हुँदा ठूलीआमालाई अस्पताल लैजानुपर्ने अवस्था आइपऱ्यो । अस्पताल आउनुभन्दा पहिले नै उहाँले आफ्नो विवाहमा ओढाएको घुम्टी अहिलेसम्म जतन गरी राख्नुभएको जानकारी दिँदै त्यो घुम्टी मेरो अन्तिम बेलामा ओढाइदिनु है भनी भन्नुभएकाले त्यो घुम्टी पनि सँगै ल्याउनु भन्नुभएको रहेछ । त्यतिकैमा उहाँलाई घरमा नै अप्ठ्यारो महसुस भएकाले बानेश्वरको ह्याम्स हस्पिटलमा भर्ना गरियो । बानेश्वरमा ठूली दिदीको घर भएकाले हामीलाई ठूलीआमालाई हेरचाह गर्न पनि सजिलो भयो । उहाँलाई भेट गर्न धेरै आफन्तहरू आइरहनु हुन्थ्यो । उहाँको स्वास्थ्यलाभको कामना र सहभावना व्यक्त गर्ने आफन्तजनको आगमनले छुट्टै सान्त्वना मिल्थ्यो । उहाँको स्वास्थ्य अवस्थामा केही सुधार भएको जस्तो पनि हुन्थ्यो । कहिले फेरि अवस्था नाजुक बन्थ्यो । म उहाँलाई २०६६ मंसिर १३ गते बाबु नानी लिएर भेट गर्न गएँ । त्यसको भोलिपल्ट १४ गते बिहान पनि भेट गर्न जाने तर्खर गर्दै थिएँ । मेरो श्रीमान्ले अहिले किन जानु पऱ्यो, केही सुधार भए जस्तो छ, भोलि तिर जाऊला भन्ने सल्लाह दिनुभयो । तर मेरो मनले मान्दै मानेन । मैले उहाँलाई पुऱ्याइदिन अनुरोध गरें । उहाँले हार्न सक्नुभएन । मलाई बिहान दस/एघार बजेतिर हस्पिटल पुऱ्याइदिनुभयो । हस्पिटलमा म उहाँको अवस्थामा केही सुधार भएको देखिएकाले मसँगै भएको भाइ सन्तोष पनि केहीबेरपछि अफिस जाने तर्खर गर्दै थियो । ठूली दिदी पनि आमालाई खानाको व्यवस्था गर्न घरतिर जानुभयो ।

मैले मेरो हात सिरानी दिँदै मेरो काखमा राखी आधा घन्टा जति आमासँग कुराकानी गरें । बोल्दै जाँदा उहाँले बोलेको बोली बुझ्न सकिनँ । आँखा लोलाइसकेका रहेछन् । त्यतिखेर दिनको बाह्र-एक जति बजिसकेको थियो । म आफैं आत्तिएँ । बानेश्वर घरबाट ठूली दिदी पनि आइपुग्नुभयो । त्यसको केहीबेरमा (सान्दाइ) शारदा दाइ खाना खान जानुभएको थियो । केही बेरपछि सान्दाइ पनि आइपुग्नुभयो । यो उहाँको जीवनको अन्तिम क्षण थियो । त्यति हुँदाहुँदै उहाँ एक्लै हामीलाई छाडेर यस संसारबाट २०६६ साल मंसिर १४ गते आइतबार द्वितिया तिथिको दिन अपराह्न साढे एक बजे परमेश्वरमा लिन हुनुभयो । अनि अन्तिम संस्कारका सम्पूर्ण सामग्री तयार गर्नतिर लाग्यौं । उहाँको त्यो घुम्टीसँगै सिउँदोमा सिन्दुर भरेर अन्तिम संस्कारका लागि तयारी हुँदै थियो । आफन्तजनहरूलाई त्यहाँ हुनु हुनेहरूले खबर गर्नुभयो । कोही त्यहीं आइपुग्नुभयो भने कोही पशुपतिमा नै अन्तिम श्रद्धाञ्जलीका लागि सहभागी भई उहाँको चिरशान्तिको कामना गरियो ।

अन्त्यमा भागवत् गीतामा भनेझैं आत्माका लागि न कहिल्यै जन्म छ न मृत्यु । आत्मा कहिल्यै जन्मँदैन र जन्मिने छैन । ऊ त अजन्म छ, नित्य छ, शाश्वत् छ र पुरातन छ । शरीर मर्दा पनि ऊ मर्दैन । हो यसरी नै मेरी प्रातःस्मरणीय कोमल हृदयकी धनी आस्थाकी प्रतिमूर्ति श्रद्धेय ठूलीआमा (हस्तकुमारी धिताल) को दिवंगत आत्माको चीरशान्तिका लागि भावपूर्ण यिनै सम्झनाका श्रद्धासुमन अर्पण गर्न चाहन्छु ।







# सम्भनामा आमै र उहाँको व्यक्तित्व



जितेन्द्र धिताल

परिवर्तन नै सृष्टिको नियम हो नयाँ आउने र पुरानो जाने क्रम अनन्तसम्म रहिरहन्छ भनिन्छ सायद यही नै परिवर्तन हो र जीवनको सार पनि हो। ढुंगा, माटोजस्ता निर्जीवन वस्तुहरूले त समयसँगै आकार र स्वरूप बदल्छन् भने प्राण भएका जीवहरू त्यसमा पनि हामी मानव सृष्टिको नियमबाट टाढा रहने कल्पनै कहाँ गर्न सकिन्छ र। कस्तो हने थियो होला यदि हामीले चिनेका र देखेका हाम्रा प्रियजनहरू सधैं हामीसँगै रहने हो भने अनि हामीले चाहेका जीवनका अविस्मरणीय क्षणहरू हाम्रा चाहनाअनुरूप परिर्वतन नहुने गरी हामीसँगै राख्न सक्ने क्षमता हरेक मानवसँग हुने भए तर संसारमा सोचेको जस्तो कहाँ हुन्थ्यो र। जीवनको यही अपूर्ण पक्षहरूले गर्दा नै होला आज पनि यसको चित्त बुझ्दो परिभाषा कसैसँग छैन। सबैले जीवन र जगतलाई आफ्नो-आफनो भोगाइहरूको ऐनाका रूपमा मात्र परिभाषित गर्न सकेका छन्।

समय सबभन्दा बलवान छ समयसँगै जीवनका हरेक तीता-मीठा पक्षहरू आजभन्दा भोलि अनि भोलिभन्दा पर्सि हामीभन्दा टाढा हुँदैजाने गर्छन् र स्मृतिका रूपमा जीवनभर हाम्रा वरिपरि रहिरहन्छन् यसैले होला आज थाहै नपाई वर्ष दिन पुगिसक्यो हाम्री हजुरआमा हामीबाट धेरै टाढा जानुभएको तर पनि हिजोको जस्तै लाग्छ ती दिनहरू जुन उहाँसँगै वरिपरि नै रहेर बितेको थियो। उहाँले सुनाएका ती पुराना दिनका सम्झनाहरू, ती दिनहरू अनि ती जीवनका घटना सुनाउँदा उहाँको मुहारमा देखिएका अनेक भावहरूसँगै आउने मसिनो तर मीठो मुस्कान, आग्रह पछि बिना हिचकिचावट हास्दै सुनाउनु भएको ती श्लोकका पंक्तिहरूको गुञ्जन यी र यस्तै नै हजुरआमाका सम्झनाहरू मात्र आज हामीसँग छ। कहिलेकाहीँ मोबाइल खोलेर रेकर्ड गरिएका ती स्वरहरू सुन्दा लाग्छ हजुरआमाको देहवसान एउटा नमिठो झूठ हो आज पनि उही अनुहार र भाव भङ्गीमा उहाँ हामीसँगै यही हुनुहुन्छ तर के गर्नु मनले नमाने पनि त्यो बिछोड एउटा कठोर सत्य बनेको छ।

थाहा पाउन सक्ने भएदेखि आमै भन्ने गरेकाले होला हजुरआमाभन्दा पनि मलाई आमै शब्द प्यारो लाग्छ। अनि कहीँ कतै कसैले कुरा गर्दा मलाई मरै आमैको संझाना आउछ। छोटो कदमा पातलो शरीर, हिउजस्तै फुलेका सेता कपालका केसहरू (मैले थाहा पाउँदा उहाँको तिलचामले कपाल थियो पछि पूर्ण रूपमा सेतो भएको थियो) आँखामा मोटो चस्मा अनि स्वच्छ शान्त, सरल र ममतामीयअनुहार यही हो आमैको पहिरन अनि पहिचान तर यो पहिचानभन्दा निकै फराकिलो छ उहाँको व्यक्तित्व जो हामी सबैका लागि सधैं प्रेरणाका रूपमा रही रहेको छ। तीन छोरा, दुई छोरी तथा सत्र नातिनातिना सहितकी हाम्री आमै हामी सबैका लागि मात्र होइन उहालाई चिन्ने उहाँसँग संगत गर्ने जो कोहीको लागि पनि सम्झन योग्य व्यक्तित्वका रूपमा रहनुभएको छ।







रिस, डाह, लोभ अनि आवेग आदिलाई मानव मात्रका गुण मानिन्छ र भनिन्छ यसैमा संसारिकता गाँसिएको हुन्छ। यी दोषहरूको मात्रा फरक पर्ने भएर नै होला बढी भएमा दानव र दोषहरूबाट मुक्त भए भगवान्‌को उपमा दिइन्छ। जीवनको एक तिहाई समय आमैसँग बिताएको मलाई आमैको अन्तिम समयसम्म पनि उहाँ कसैसँग रिसाएको, कसैलाई गाली गरेको थाहा छैन। मानव गुणहरू र तिसँगै रहने दोषहरू अवश्य पनि थियो होला तर कहीँ कतै कसैको लागि कुभलो नचिताउने हाम्री आमै आफू दुःख सहेर भए पनि अरूको लागि खुशी भइदिनु हुन्थ्यो। मातृत्व त केबल आफ्ना सन्तानहरूका लागि हुन्छ ममतामयी आमा आफ्ना सन्तानहरूको लागि सहनशील बन्छे तर त्योभन्दा पनि फरक सबैका लागि सहनशील बन्ने कसैको चित्त नदुखाउने हाम्री आमैलाई के भन्ने, मलाई आज पनि आमैको त्यो बानी याद छ खाना खाँदा कम भएको सुन्दा उहाँ भन्नुहुन्थ्यो आज उहाँलाई खानै मन लागेको छैन, सुत्न असजिलो भएको बेला उहाँ भन्नुहुन्थ्यो उहाँलाई त्यही नै ठीक लागेको छ।

बाहिरबाट उहाँलाई भेट्न गएका मानिसहरूले दिएको कोसेली सबै परिवार भेट भएपछि सँगै बसेर खाउला भनेर राख्दा धेरै समयपछि मुसा र बिरालाले खाएको चाल पाएपछि आमै आफैं हामीहरूको अगाडि पछुताएको क्षणहरू होस् या दिदीको सामुन्ने जोगी बनेर मैले अलकभन्दा चामल बोकेर तलाबाट झर्नु भएकी आमैले हामीले झुक्याएको थाहा पाएर हाँस्दैभित्र जानुभएको क्षण अब ती त केवल आमैको सम्झनामा मात्र सीमित भएका छन्।

पाप पुन्यका कुरा बकवास मात्र हुन, भगवान्‌को अस्तित्व र उनले हेर्ने न्याय अन्यायका कुराहरू पनि मन बुझाउने बाहना मात्र हुन भन्न मन लाग्छ नत्र किन त जिन्दगीभर अरूको भलो चिताएर, अरूले आफूलाई गरेको रिस, द्वेष, छलकपट व्यवहारप्रति पनि गर्नेलाई पुग्छ भने म सही दिन्छु भन्ने हाम्री आमैलाई जीवनको उतरार्द्धमा कष्ट सहेर जिउनु पऱ्यो। दुवै आँखाको शक्ति गुमाएर आफू हिँडडुल गर्न नसक्ने हुँदासमेत उहाँ मलै कतै दुःख त दिइरहेको छैन भन्ने सोच्नुहुन्थ्यो। न साट्न सकिने न बाँड्न सकिने आमैका ती तीता दिनहरूमा समेत उहाँ आफ्नो पीडाभन्दा परिवारको बारेमा चिन्तित हुनुहुन्थ्यो। कहिलेकाहीं धेरै पीडा भएको बेला तिमीहरूलाई असजिलो भयो भन्दै उहाँ हामीबाट टाढा जाने कुरा गर्नुहुन्थ्यो जुन हाम्रा लागि असहीय थियो। उहाँको उपस्थितिले मात्रै पनि हामी धन्य थियौं। भन्न सजिलो थियो तर त्यो उपस्थितिमा उहाँ आफैंले भोगेका असंख्य दुःखहरू हामी सबै नजिकै भएर पनि मात्र अनुभूत गर्न सक्थ्यौं जसले भौतिक रूपमा उहाको दुखाई कम गर्दैनथ्यो। समय निष्ठुर बनिदियो उहाँको उपस्थिति हाम्रो लागि सम्झना मात्र हुन पुग्यो आज पनि उहाँका तस्विरहरू, उहाँ बस्ने कोठा र त्यो नजिकको वातावरणहरू हेर्दा उहाँको असाध्यै सम्झना आउँछ।

**हजुरआमाको देहावसान एउटा नमिठो झूठ हो आज पनि उही अनुहार र भाव भङ्गीमा उहाँ हामीसँगै यही हुनुहुन्छ तर के गर्नु मनले नमाने पनि त्यो बिछोड एउटा कठोर सत्य बनेको छ**

आज आमै हामी बीच भौतिक रूपमा नभए पनि उहाको सहनशील स्वभाव, सबैका लागि भलो चिताउने कमलो हृदय, अनि सरल तर संघर्षशील व्यक्तित्व हाम्रो प्रेरणाको स्रोत र प्रात स्मरणीय बनेको छ। भगवान्‌ले अवश्य पनि उहाँको आत्मालाई स्वर्गमा स्थान दिनेछ भन्ने कामनासहित आमैप्रति श्रदाञ्जलिका शब्दहरू यही बिर्साउँछु।









# हजुरआमाप्रति



सिर्जना धिताल

जिन्दगीको भागदौडमा समय बितेको पत्तै नहुने। मेरी प्यारी हजुरआमा जसले हामीलाई चटक्कै छाडेर जानुभएको पनि एक वर्ष बितिसकेछ। आज पनि मंसिर १४ को त्यो कहालिलाग्दो र कल्पनै नगरिएको क्षण सम्झँदा अनायाशै आँखाहरू रसाएर आउँछन्। उहाँसँग बिताएका ती मीठा क्षणहरू, उहाँले सुनाउनुभएका जिन्दगीका अनुभवहरू, कर्तव्य परायणता र मार्गदर्शनहरू हिजो जस्ता लाग्छन् तर आज ती सबै केवल सम्झनामात्र बन्न पुगेको छ।

ममतामयी, निष्कपट, सरल र सधैं अरूको भलो चाहने, अरूको खुसीमा नै आफ्नो खुसी खोज्ने हाम्री हजुरआमाको भौतिक शरीर आज हामीमाझ नभए पनि उहाँले दिनुभएको उपदेश र मार्गदर्शनले हामी सबैलाई सधैं सत्मार्गमा हिंड्नलाई अभिप्रेरित गरिरहनेछ। वर्ष दिनको यो पुण्यतिथिमा मेरा दुई शब्द उहाँमा मात्र केवल उहाँमा समर्पित गर्छु।

*हजुरआमा मेरी हस्तकुमारी*
*बान्की परेकी बाटुलो मुहारकी*
*चन्द्रमाजस्तो गोरो वर्णकी*
*सतासी वर्षकी केश सेतै फुलेकी*
*सरल अनि सधैं हँसिली अनुहारकी*
*सानो कदकी तर नरम मिजासकी*
*मायालु भावकी अनि दयाकी खानी*
*सबैकी प्यारी हजुरआमा मेरी*
*आँखाकी नानी परिवारकी रानी*
*सुरिलो स्वरकी धनी आकर्षिणी*
*महामाता ती मेरी हस्तकुमारी*
*निष्कपट थिइन् ती अति फरासिली*
*सहनशीलताकी प्रतिमूर्तिकी शती*
*ममतामयी ती हजुरआमा मेरी*
*स्वर्गे हुनुभो वर्ष दिन अगाडि*
*मंसिर चौधको त्यो कालो रातसरि*
*आयो निर्दयी दिन भयंकर कालसरि*
*चुंडेर लग्यो बनी निष्ठुरी*
*बिदा हुनुभयो हजुरआमा मेरी हस्तकुमारी*











# सम्झनाका पलहरू



**उज्वल भट्ट**

मेरो बुवा आमाको कान्छो सन्तान हुनुको कारण हो वा अन्य केही मैले अरूले भन्दा बढीनै माया पाएको अनुभव गरेको छु ।

मेरो घर मामाघरबाट त्यती धैरै टाढा छैन् । करिव २५ मिनेट मात्र लाग्छ होला । सवै भन्दा सानो भएको कारण मामाघर गईनै राख्थें । फेरि भाइहरू मेरो उमेरकानै भएकोले साथिहरूको अभावपनि भएन् । मेरो उपस्थितीले मामाघरमा अर्कै खुसियाली छाएको अनुभुति हुन्थ्यो मलाई । सानीमाको घर मामाघर बाट अलि धैरैनै टाढा र भाइहरू पनि अलि साना भएको कारण आइराख्न सक्दैन थिए । त्यस्तो अवस्थानमा मेरो उपस्थितीले मामाघरमा रमाइलो ल्याउँथ्यो । यो मेरो अनुभुती हो ।

जव म थाहा पाउने उमेर देखि मामाघर जान थाँले, त्यसवेला देखि मैले हजुरआमालाई रातो फरिया र चोलोमा सजिएकी देख्थें । हसिलो र गोरो अनुहारमा रातो टिका लगाउँदा उहाँको मुहार विशेष किसिमले खुलेको अनुभव हुन्थ्यो । मामाघर जानासाथ के खान्छौं नि वावु भनेर उहाँले सोध्नु हुदा अर्कै रमाइलो अनुभव हुन्थ्यो ।

मामाघरमा र घरमा खानेकुरा उस्तै न हुन्छ । तर मामाघरको दुध र चीया भने अलिक अर्कै स्वादको लाग्थ्यो मलाई । लामो समयसम्म आगोमा राखिरहँदा कहिले काँही दुध डढेको हुन्थ्यो । अरूलाई त त्यो दुध र त्यसबाट बनेको चिया कस्तो लाग्थ्यो थाहा छैन तर मलाई भने त्यसको बास्ना विशेष मिठो लाग्थ्यो । म मामाघर जाँदा त्यस्तो स्वाद र वास्ना भएको दुध छैन भनेर हजुरआमालाई सोधि राखेको हुन्थें ।

अहिले हजुरआमा हामी साथ हुनु हुन्न । उहाँले हामीलाई छोडेर जानुभएको पनि एक वर्ष भईसक्यो । तर समय न हो वित्न कति न वेर लाग्छ र ।

मामाघरबाट हजुरआमाको पहिलो बार्षिक पुन्य तीथिको अवसरमा एउटा श्रद्धाञ्जली पुस्तिका निकालौं, हामी सवैले हजुरआमासँगको सम्झनालाई लिपी बद्ध गरौं भनेर दाइको इमेल आएको थियो ।

सोचें मैलेपनि लेख्नु पर्छ । हाम्रो परिवारको श्रद्धेय सदस्य, जस्ले जहिलेपनि हामीलाई सत्मार्गमा लाग्ने प्रेरणा दिईरहनु भयो, आफ्नो जीवनको अन्तिम क्षणसम्म पनि हाम्रो सफलताको कामना गरिरहनु भयो उहाँको बारेमा केही लेख्न पाउनु मेरो अहोभाग्य हो भनेर सोचें ।

लेख्न बस्छु भनेर बसें तर अनेक संझनाहरू एकैपल्ट मस्तिस्कमा आउन थाले । हजुरआमासँगको यो क्षणको बारेमा लेखुँ कि त्यो क्षणको अटेसमटेसका साथ आउन थाले । कलमनै अघि सरेन् ।

सायद उहाँप्रतिको सम्मान र माया तथा उहाँको म प्रतिको स्नेहको परिणाम थियो की त्यो ।

मैले कहिलेपनि हजुरआमाले ठूलो स्वरमा बोलेको सुनिन् । सानो स्वरमा विस्तारै बोल्नु हुन्थ्यो । उहाँले रिसाएको र रिसायर गालि गरेको पनि याद छैन मलाई । अलिक चित्त बुझेन भनेपनि विस्तारै भन्नु




हुन्थ्यो, उहाँले सल्लाह दिनु भएको हो वा गालि छुट्याउनै गाह्रो हुन्थ्यो मलाई ।

धेरै दशैंमा मैले हजुरआमाको हात बाट आर्शिबाद थापेको छु । उहाँले जीवनका हरेक पाइलामा याद हुने आर्शिबाद दिनु हुन्थ्यो । ती आर्शिवादहरू मेरो जीवनमा लागेको अनुभव गरेको छु मैले । सुखमा नमात्तिने र दुखमा नआत्तिने स्वभावकी हजुरआमाबाट मैले धेरै कुरा सिकेको छु । आमाको साथमा मामाघर जाँदा होस वा एक्लै उहाँले दिएका उपदेश र घत लाग्दो गरि सुनाउनु भएको आफ्ना स्मरणहरू अहिलेपनि त्यतिकै मनन योग्य छन् ।

कसैसँग जति नराम्रोसँग रिस उठेपनि नराम्रोबचन लगर्ने उहाँको स्वभावले मलाई दुःखमा पनि सहनसक्ने क्षमता प्रदान गरेको जस्तो लाग्छ ।

अव, उहाँको भौतिक शरिर हामी बीच छैन तर उहाँको संझना हाम्रो विचमा सदैव रहि रहने छ । उहाँका बचनले हामीलाई प्रेरणा दिईरहनु हुने छ । उहाँप्रति हार्दिक श्रद्धाञ्जली ।





# जीवनचक्र

**अनिता भट्ट, अधिकारी**

*दुनिया स्वार्थी छ थाहा थियो*
*ईश्वरको पनि रूप देखियो*
*आफ्नो वाग सुन्दर देख्यौ*
*धर्तीमा खोज्दा तिमीलाई भेट्यौ*
*बोलाए तिमीलाई अंगालो हाली*
*तिमी गयौ हामीलाई टुहुरोपारी*
*टुहुरा हामी बस्यौं रुदै*
*यादमा तड्पी अन्यौल हुँदै*
*रिस उठयो इश्वरमाथि*
*लगेर तिमीलाई गरेनन् जाति*
*जे भए पनि सहनै पर्ने बाध्यता जस्तो*
*आएपछि जानैपर्ने यो जीवनचक्र कस्तो*

*इन्डियाना पोलिस, अमेरिका*



# आमा

**अनुजा भट्ट**

आमा तिमी कति महान छौ
सबैको रक्षा गर्छ्यौं ।
हामीलाई जन्म दियौ ।
तिमीले हामीलाई ज्ञान बुद्धि दिन्छ्यौ ।
हाम्रो जीवनमा तिमीले उज्यालो भरि दिन्छ्यौ ।
तिमीले सिकाएको बाटोमा हिड्यौं भने ठूलो मान्छे हुन्छौं ।

तिमी नभएको भए हामीले जीवन पाउने थिएनौं होला
तिमीले हामीलाई विद्यालय पठाउँछ्यौ बोकाएर झोला
तिमीले हामीलाई आफ्नो खुट्टामा उभ्याउन धेरै कष्ट गर्‍यौ होला ।

शायद हामीले तिम्रो दुःख र कष्ट कहिल्यै पनि मेटाउन सक्दैनौं होला
हामी सबैले तिम्रो प्रतिभाको कदर गरेनौं भने तिम्रो मन दुख्छ होला ।
आमा भन्ने चिज यो संसारको ठूलो चिज हो ।
योभन्दा यस संसारमा अरू केही महान छैन होला ।

*रेडन उच्च मावि, सामाखुशी*





# हजुरआमाप्रति हार्दिक श्रद्धाञ्जली



प्रवीण भट्ट

धिताल परिवारको नयाँ सदस्यको नाताले हाम्री श्रद्धेय हजुरआमाको स्मरणमा केही शब्द लेख्ने प्रयत्न गर्दै छु। हुन त हजुरआमा र मेरो भेट र सम्वादका पलहरू औंलामै गन्न सकिन्छ। मेरो स्मरण पटलमा बनेको हजुरआमाको छाया भेटघाटबाट भन्दा पनि उहाँको ममता र महानताको कुराकानीबाट बनेको हो। सूचना र मेरो भेट अगाबै पनि कुभिन्डे र बानेश्वर जाँदा उहाँको बारेमा धेरै नै सुन्ने गरेको थिए। तिनै कुराकानीका आधारमा मेरो मस्तिष्कमा उहाँको एउटा आकृति बन्थ्यो जुन मेरी हजुरआमा ललिता देवीसँग धेरै मेल खान्छ र अनायसमै उहाँ दुवैलाई दाज्न पुग्थें।

दुवैको आचरण समान, व्यवहार समान, संस्कार समान, आदर्श समान, अरुलाई दिने स्नेह समान, सम्मान समान, मिठा बोलिचाली समान.......। अहिले हस्तकुमारी हजुरआमाको बारेमा लेख्न लाग्दा पनि मलाई मेरी हजुरआमा ललिता देवीको धेरै याद आइरहेको छ। सायद उहाँहरू दुवैको जन्मस्थान एकै ठाउँ भएर पो हो कि या एकै पधेराको पानी खाएर हुर्किएको मुटुमा माया र स्नेह पनि उस्तै हुँदो रहेछ कि ? उहाँको माया, ममता र उपदेशको छत्र-छायामा हुर्किएकी जीवन संगिनी पाउँदा म आफैंलाई भाग्यमानी ठान्छु।

हजुरआमा यति मायालु हुनुको रहस्य के होला ? नाति-नातिनाका लागि न उनीहरू भगवानले नै बनाइदिएका प्यारा खेलौना हुनभन्दा फरक नपर्ला (या उनीहरूका लागि नाति नातिना)। मेरो हजुरआमाबाट मैले न्यानो स्नेह पाएको छु। उहासँग बिताएको रमणीय पलहरू र उहाँको रमाइला गफहरू मैले धेरै जनालाई सुनाएको छु। उहाँ माया र ममताको परिभाषा हुन भन्दा फरक पर्दैन। सबैका हुजरआमाहरू मेरी जस्तौ हुदैनन् होला जस्तो लाग्दथ्यो मलाई। तर धिताल परिवारले हजुरआमाको सम्झनामा प्रकाशन गर्न लागेको हस्तेश्वरीमाला प्रकाशनको जमर्को र उत्साह देख्दा उहाँप्रति समस्त परिवारको आगाद श्रद्धा र प्रेम भएको बुझ्न कसैलाई पनि समय लाग्दैन।

उहाँसँग मेरो अन्तिम भेट उहाँको जीनको उत्तरार्द्ध २०६५ साद फागुनमा सिनामंगलमा भएको थियो। त्यसवेलाको भेटमा हाम्रो नाता जोडीसकेको भने थिएन। वद्व-वृद्धाहरूलाई आफ्नो सन्ततीको परिवार बिस्तार भएको हेर्ने रहर धेरै हुन्छ रे।

उहाँलाई पनि भविष्यमा जोडिने हाम्रो सम्बन्धको बारेमा थाहा भएको भए हाम्रो भेट अझै रमाइलो र प्रेम प्रगाढ हुने थियो कि ? मेरो पनि उहाँसँग पुन हजुरआमा-सासू भएपछि भेट्ने इच्छा अधुरो नै रह्यो, तर म विश्वस्त छु उहाँ हामीसँगै नै हुनुहुन्छ र यतैकतैबाट उहाँले हामीलाई सधैं हेरि रहनुभएको छ र सतमार्गमा लाग्ने आशीष दिइरहनु भएको छ। उहाँको बैकुण्ठमा बास होस् र आत्माले चिर शान्ति प्राप्त गरोस्।





# मेरी आमा



डा. सूचना धिताल

सानो कद, गोरो वर्ण, सेताम्मे फुलेका कपालमुन्तिर सिम्रिकको ठूलो रातो टीका, खुब राम्री लाग्थ्यो मलाई मेरी आमा । नातामा मेरी हजुरआमा भए पनि म उहाँलाई आमा नै भनेर सम्वोधन गर्थे । मैले आफ्नो होस् सम्हाल्न थालेपछि नजिकिने सौभाग्य पाएको छैन, मैले उहाँसँग धेरै । त्यसैले होला जब म उहाँलाई सम्भन्छु यही रूपमा याद गर्छु वृद्ध अवस्थाकी मेरी हजुरआमा । उहाँको जीवनका उत्तरार्धका केही वर्षमात्र उहाँसँग बिताउन पाएँ । तर दुर्भाग्यवस त्यतिबेला आमाले हामीलाई हेर्ने दृष्टि गुमाई सक्नुभएको थियो । यो कुरा धेरै खड्किरहन्थ्यो उहाँलाई । जब पनि म उहाँ अगाडि जान्थें आफ्ना कोमल हात मेरो अनुहारमा ल्याउनुहुन्थ्यो अनि विस्तारै सुम्सुम्याउनु हुन्थ्यो उहाँ । म आफू डाक्टर भएर पनि केही गर्न सकिनँ मैले आमाका लागि मन खिन्न हुन्थ्यो मेरो । नसा मरिसकेको छ भन्थे डाक्टरलाई देखाउँदा । म के नै पो गर्न सक्थें र । तैपनि पाँच, छ वर्ष अगाडिमात्र मेरो पढाइ भइदिएको भए पनि म केही गर्न पो सक्थे कि । मनमनै कुरा खेलाउथें म कहिलेकाहीं ।

म धरानमा नै थिएँ त्यति बेला । अचानक फोन आयो, आमालाई हस्पिटलमा भर्ना गरेर राखेको छ रे । आत्तिएँ म । उहाँलाई पहिल्यैदेखि दम थियो । त्यही पो बल्भियो कि । निमोनिया भएको छ तर अवस्था राम्रो बन्दै गएको छ । दुई/चार दिनमा घर पठाउँछौं होला । आमालाई हेर्ने डाक्टरसँगको कुराकानीमा दिउँसो आश्वासन पाएर म अलि ढुक्क भएको थिएँ ।

बिहानको करिब १० बजेको थियो होला । भर्खरै अस्पताल पुगेको थिएँ म । खबर आयो । आमा हामीमाभ रहनुभएन रे अब । खुब रोएँ म त्यो दिन । उहाँको चित्र आँखा अगाडि घुमिरहन्थ्यो । उहाँको देहवसानको अविश्वासिलो तथ्य सँगसँगै आफ्नो निरीहपन सम्भेर धेरै रोएँ म । जीवनका ती कष्टप्रद पछिल्ला दिनमा म उहाँसँग भइदिएको भए सायद उहाँलाई एउटा भरोसा हुन सक्थ्यो । समयकाललाई कसले पो रोक्न सक्छ र तैपनि मेरो एउटा आधार बन्न सक्थ्यो उहाँका लागि । त्यही विश्वास पनि दिन सकिनँ मैले । आफ्नो लाचारीपन सम्भेर धेरै रोँए म । परिस्थितिको अगाडि कसैको केही लाग्दोरहेनछ । तर त्यो सँगसँगै मैले एउटा अठोट पनि लिएँ । मैले आमालाई आधार दिन सकिनँ तर आमा जस्तै थुप्रै हजुरआमा हजुरबुवाका लागि एउटा भरोसा हुन सक्छु ।

अभै पनि थुप्रै हजुरवा हजुरआमाहरू उपचारको अभावमा आफ्ना दृष्टि गुमाउन बाध्य छन् । उनीहरूले मेरी आमाले जस्तै जीवनको उत्तरार्धमा उदास भएर बाँच्न नपरोस् । त्यसैले उहाँकै नामबाट घ्याम्पेसालमा एउटा आँखा शिविर आयोजना गर्ने जमर्को गरेका छौं हामीले ।

यो आँखा शिविरलाई पूरा गर्न सक्नु नै अहिलेको महत्त्वपूर्ण काम हो हाम्रा लागि । ती वृद्धा-वृद्धाको जीवनयापनमा केही मात्र सहजता ल्याउन सक्यौं भने पनि उनीहरूकै आशिषबाट आमाको आत्माले शान्ति पाउनेछ । र, त्यसका लागि हामी सबैले हातमा हात मिलाई आफ्नो-आफ्नो तवरले सहयोग गर्न जरुरी छ । त्यसपछि मात्र हामीले आमाका लागि केही गरेको ठहरिनेछ । ❀









# सम्झनामा हजुरआमा



सुदर्शन धिताल

अघिल्लो वर्षको मंसिर १४ गते अन्दाजी अपराह्न ४ बजे आर्यघाटको भस्मेश्वरको चितानजिक मनलाई कठोर बनाउन खोज्दा-खोज्दै मेरो आँखाबाट दुई थोपा आँसु खसे। चितामा मेरी ममतामयी हजुरआमाको शव जलिरहेको थियो।

मैले सम्झे यो पार्थिव शरीर बेकार रहेछ। मलाई यो घटनाले जीवन र जगतप्रति गम्भीर हुन बाध्य बनायो। जीवन के हो ? मानव जन्म केका लागि ? जन्मिसकेपछि के गर्नुपर्छ ? किन आयौं यो धर्तीमा ? यस्ता धेरै प्रश्नहरू मेरो मन मस्तिस्कमा तरङगित भइरहन्छन्।

जीवन मायाको डोरी हो। जुन जीवनको अन्त्य पछि चुडिन्छ। तर मलाई लाग्यो जीवनको अन्त्य पछि मृतकलाई के हुन्छ ? मृतात्मा नै जानुन्, बाँच्नेहरूका लागि माया अझै घनिभूत हुँदो रहेछ। रहँदाका यादहरूले बाँच्नेहरूलाई सताई रहँदा रहेछन्। बाँच्नेहरूले सम्झी नै रहन्छन्। जीवन त्यो हो-जो मरेपछि पनि लामो समयसम्म प्रेमको पियुस वर्षा गराइ रहन्छ। जीवन मृत्युलाई मूल्यांकन गर्दा मृत्युपछि जीवन जिउन सक्नेहरू महान बन्दा रहेछन्।

मैले सम्झे किन २५ सय वर्षसम्म बुद्ध बाँचिरहे। अझै कति बाँच्लान्। यदि समाजको निम्ति त्याग नगरेको भए, सिद्वार्थ आज सिद्वार्थ गौतमबुद्ध बनि रहन सक्दैन थिए। बुद्वको समयमा थिए हजारौं लाखौं मान्छेहरू तर आज उनीहरूको चर्चा सुनिंदैन।

कृष्ण, राम, क्राइष्ट, बुद्व, मोहम्मद, गान्धी आदि चिर कालसम्म बाँचेका छन्। हाम्रै देश नेपालमा जनक सीता भृकुटी, पृथ्वीनारायण, बलभद्र कुवर लक्ष्मीप्रसाद देवकोटा, भानुभक्त आदि धेरै सपुतले मरेर पनि जीवन पाइरहेका छन्। उनका समकालीन कति थिए, तिनीहरूको खोइत ? आज इतिहासको गर्भमा तिनीहरू अल्पिए। वर्तमान समयमा रहेका इतिहासका पात्रहरू विश्वेश्वरप्रसाद कोइराला, मनमोहन अधिकारी, गणेशमान सिंह, पुष्पलाल श्रेष्ठ, मदन भण्डारीहरू नेपालको इतिहासमा मरेर पनि बाँचेका नामहरू हुन्।

आर्यघाटमा इतिहासमा बिर्सजन गर्नेहरू सबैको आ-आफ्नो इतिहास अवश्य हुन्छ। तर त्यो कति तन्कन्छ। कति टिक्छ-त्यसको मापनमा भर पर्ने कुरा हो। मानव जीवनमा व्यक्तिको व्यक्तित्व मापन के हुन्छ ? मूल्यांकन कसरी गर्ने ? यो सबै कुरा व्यक्तिको कर्तव्य प्रणयता, त्याग तपस्या र बलिदान हुन्। जुन कुराले व्यक्ति समाजमा अजर-अमर रहन्छ। मेरो विचारमा प्रत्येक मान्छेको आफ्नो इतिहास हुन्छ, उसको आयु, उसले जीवनमा देखाएको सामाजिक सद्भाव र सामाजिक दायित्वबाट टुंगोलाग्छ। कोही बाँचेर पनि मरेका हुन्छन्, कोही मरेरपनि बाँचेका हुन्छन्।

मेरी हजुरआमा हस्तकुमारी धिताल हाम्रो परिवारमा मरेपछि जीवित नाम हो। उहाँको जीवनकालमा उहाँको नाम गुमनाम थियो। मैले





सुन्दा उहाँलाई धितालकी साइली भनेको सुन्दथे। उहाँले छोरा, छोरी, नाति, नातिनाप्रति गरेको सेवा सद्भाव ममताले उहाँलाई उहाँका सन्तानले चिरकाल सम्झी रहनेछन्। मेरी ममतामयी श्रद्धय हजुरआमाका सन्तान आज विश्वभर छरियर रहेका छन्। हजुरआमाले लगायको गुन हामी नातिनातिना सबैले सम्झी रहेका छौं सम्झी रहने छौं।

उहाँको हसीलोपन उहाँको स्नेहीभाव, सबैलाई माया गर्ने स्वभाव यो बिर्सि नसक्नु छ। उहाँ त्यस्तो पाठशाला हो जहाँबाट हामीले अथाह ज्ञानको भण्डार सिक्न सक्थ्यौ। उहाँको स्वभाव अत्यन्त अनुकरणीय थियो। बच्चामा उहाँले हामीलाई गर्नुभएको माया, ममता र हामीप्रतिको कर्तव्यलाई सम्झदा हाम्री हजुरआमा दिंवगत भइसकेपछि पनि हाम्रो परिवारमा उदाई रहनु हुनेछ। प्रत्येक सन्तानको मनमस्तिकमा विराजमान हुनुहुनेछ- उहाँको आयु मृत्युपछि दीर्घ हुनेछ। म स्वर्गीय हजुरआमाको आत्माको चिर शान्तिको कामना गर्दै आज उहाँको सम्झनामा पुनः दुई थोपा आँसु चुहाउँछु तप्प ! तप्प !!



# नेपालमा विद्यार्थीहरू किन फेल हुन्छन् ?



कमला लामिछाने

एक वर्षमा ३ सय ६५ दिन हुन्छ। जसमध्ये ५२ वटा शनिबारहरू हुन्छन्। जुन पक्कै पनि सरकारी बिदा हो। अर्थात् ३ सय ६५ दिनमा ५२ दिन सरकारी बिदा हुन्छ। अर्को तिर शुक्रबार पनि ५२ वटा नै हुन्छ। जसेको मतलब, आधा दिनमा नै विद्यालयहरू बिदा हुन्छन्। जुन जम्माजम्मी २६ दिन हुन आउँछ। दुवै बिदा जम्मा गर्दा ७८ दिन बिदा हुन्छ। यही ३ सय ६५ दिनमा ७८ दिन घटायो भने जम्मा २ सय ८७ दिनमात्र बाँकी रहन्छ। जसमध्ये पनि जाडो बिदा र गर्मी बिदा ४५ दिनको हुन्छ र जम्मा जम्मी ७६ दिन हुन्छ। २ सय ८७ दिनवाट ७६ दिन घट्यो भने केबल २ सय ११ दिन बाँकी हुन्छ।

हामी चेतनशील प्राणी भएको हुनाले हाम्रो दैनिक कार्यजस्तै बिहानको नित्यकर्मलगायत खाने, पिउने, खेलकुद आदि क्रियाकलापहरूको लागि पनि समय चाहिन्छ। जम्मा दैनिक ४ देखि ५ बितिरहेको हुन्छ। जुन वर्षको १ हजार ९ सय २५ घण्टा हुन आउँछ। अर्थात् वर्षमा ७७ दिन। अब केवल १ सय ३४ दिन बाँकी हुन्छ। मान्छेहरू यन्त्र होइनन् कार्य गर्दा गर्दै थकाई लाग्छ र आरामको जरुरत पर्छ। हामीले अन्तर्राष्ट्रिय नियमलाई मान्ने हो भने पनि दिनमा ८ घण्टा आराम, ८ घण्टा काम र ८ घण्टा मनोरन्जनको लागि छुट्याइएको हुन्छ। त्यसैले दैनि ७-८ घण्टा आराम गर्नुपर्छ। जुन वर्षको २ हजार ५ सय ५५ घण्टा हो। अर्थात् एक वर्षमा हामी १ सय ७ दिन आराम गर्छौं। यी सबै गरेर हामीसँग केवल २७ दिन बाँकी हुन्छ। जसमध्ये पनि दशै-तिहार, शिवरात्री, होली, तीज र अन्य थुप्रै राष्ट्रिय विदाहरू हुन्छन्। जुन कम्तीमा पनि २४ दिन त भइनै हाल्छ।

अन्त्यमा हामीसँग केवल ३ दिन बाँकी हुन्छ र जुन तीनवटा परीक्षा, नजितजा प्रकाशन र वितरण गर्दैमा जान्छ। अब विद्यार्थी अर्थात हामीसँग कति नै दिन बाँकी हुन्छ र पढ्नको लीग त्यसैले नेपालमा धैरै विद्यार्थीहरू फेल हुन्छन्। ❁







# हजुरआमा : आत्मीय साथी र शिक्षिका



सन्तोष धिताल

घरको कोठामा झुन्डिएको फोटो जब-जब हेर्छु, अझै पनि हजुरआमासँग अस्पतालको शय्यामा भएका संवाद सम्झिन पुग्छु। अन्तिम वाक्य मसँग राखेसँगै उहाँको चोला उठेको थियो। हजुरआमाको जति माया यो संसारमा अरू कसैको नलाग्ने रहेछ, अहिले मलाई यस्तै भइरहेछ। सम्झनाहरू आँखाभरि अझै पनि जालो बनेर अल्झिरहन्छन्। कोठाको भित्तामा क्यालेन्डरको पाना महिनैपिच्छे पल्टिँदै गए पनि हजुरआमाका अन्तिम शब्द मेरो मानसपटलमा अविरल गुन्जिरहेको छ।

### दृश्य–१

२०६६ साल मंसिर ८ गतेको कुरा हो। रातको करिब साढे नौ बजेको थियो, खाना खाएर ओछ्यानमा पल्टिरहेको थिएँ। मोबाइल फोनको घण्टी बज्यो। काकाको फोन रहेछ। फोन उठाउने बित्तिकै काकाले हजुरआमा बिरामी हुनुभयो, तुरुन्त घर आउनू भन्नुभयो। मैले काकाको कुरा तत्काल पत्याउन सकिनँ, घरबाट बेलुकी साढे आठ बजेमात्रै कोठा गएको थिएँ। त्यतिबेला हजुरआमाले साविकको झैं खाना खाएर सुत्न लाग्नुभएको थियो र म अब कोठा जान्छु भनेर हजुरआमासँग बिदा भएको थिएँ।

काकासँगको टेलिफोन संवादपछि आमालाई म तत्काल घर जानुपर्ने भयो, तपाई खाना खाएर सुत्नु भनेर कोठाबाट बाहिरिएँ। हजुरआमा बिरामी भएको कुरा आमालाई भन्न सकिनँ, आत्तिनुहोला कि भनेर। हतारिँदै म घर पुग्दा हजुरआमा बेहोश अवस्थामा हुनुहुन्थ्यो। घरमा सबै जना जम्मा भइसक्नुभएको रहेछ। हजुरआमालाई के भयो भनेर मैले सोध्नै परेन। काकाले हजुरआमालाई काखमा राखी ओठमा पानी हालिदिँदै आमा... आमा... भन्दै बोलाइरहनुभएको थियो। छेउमा रहेका सबैका गहभरि आँसु टिलपिलाइरहेका थिए। हजुरआमाको होश खुल्ने कुनै छाँटकाँट थिएन। हिन्दू संस्कारअनुसार छोरा, बुहारी, नाति-नातिनालगायत परिवारका सबै सदस्यले पानी खुवाए स्वर्गको बास हुन्छ भन्ने धार्मिक मान्यताअनुरूप हामीले पालैपालो हजुरआमा... हजुरआमा... भन्दै चम्चीले उहाँलाई पानी खुवाउन थाल्यौं। लाग्यो, अब हजुरआमा हामीबाट सदाका लागि बिदा हुँदैहुनुहुन्छ। यो सम्झिँदा मात्रै पनि मनमा चिसो भयो।

तर करिब दुई घण्टापछि मात्र हजुरआमा होश खुल्यो। सबै जनाको मलिन अनुहार एकाएक खुसीमा परिणत भएको थियो। होशमा आएपछि उहाँले मधुरो स्वरमा सबैलाई आशिष दिनथाल्नुभयो। होशमा आए पनि अक्सिजन भने उहाँको मुखबाट निकालिएको थिएन। हजुरआमाले बोल्न समेत थालेपछि अब त केही हुँदैन भनेर सबै जना ढुक्क भयौं। आ-आफ्नो घर फर्कने तयारी भयो। तर होश खुलेको आधा घण्टापछि नै फेरि अचेत हुनुभयो। त्यस रात चार पटकसम्म हजुरआमा घरि होशमा आउने त घरि बेहोश हुने क्रम चलिरह्यो। हामी नातिहरू भने पालैपालो गरी हजुरआमालाई कुरेर बस्ने भयौं।

### दृश्य २

भोलिपल्ट बिहानै पहिलो प्रहरमा नै उहाँलाई काठमाडौंको बानेश्वरस्थित ह्याम्स अस्पतालमा उपचारका लागि भर्ना गरियो। अस्पताल ठूली दिदी ( इन्द्रकुमारी भट्ट) को घरबाट करिब ५ मिनेटको दूरीमा थियो। बिहान, दिउँसो र बेलुका परिवारका सबै सदस्य एक पटक अस्पतालमा पुगिरहन्थ्यौं। तर ८८ वर्षीय





वयोवृद्ध हजुरबुवा भने आफ्नी जीवनसंगिनीको स्वास्थ्यलाभको कामना गर्दै घरमै बस्नुभएको थियो । उहाँ राम्ररी हिँडडुल गर्न नसक्ने भएकाले अस्पताल जान सक्ने पनि कुरै थिएन । अस्पताल गएर आउने परिवारका अन्य सदस्यसँग हजुरआमाको सन्चो-बिसन्चोबारे सोधिरहनुहुन्थ्यो ।

अस्पतालमा लगेको पहिलो दिन हजुरआमालाई घरमा जस्तै केही अप्ठेरो भएको थियो । निरन्तर चिकित्सकको निगरानी र उपचारले होला, अस्पताल भर्ना गरेको दोस्रो दिनदेखि उहाँको स्वास्थ्यमा केही सुधार भएको जस्तो देखियो । स्वास्थ्यमा क्रमिक सुधार देखिए पनि उहाँको बुढ्यौलीपनले भने उहाँलाई गलाउँदै लगेको थियो । तर जसरी भए पनि हामी हजुरआमा निको हुने आशामा थियौं ।

अस्पताल भर्ना गरेको तेस्रो दिन एक्कासी चिकित्सकले हजुरआमालाई *आईसीयू*मा राख्न सुझाव दिए । तर यसप्रति परिवारका सदस्य र अन्य नातेदारले असहमति जनाउनुभयो । अन्ततः उहाँको उपचार ओपीडीमै गर्न आग्रह गर्‍यौं । सोही अनुरुप चिकित्सकहरू हजुरआमाको स्वास्थ्य परीक्षण गरिरहेका थिए ।

उपचारकै क्रममा चौथो दिन हजुरआमालाई अस्पताल भर्ना गरेपछिको दिनका तुलनामा केही सहज हुँदै गइरहेको देखिएको थियो । अस्पतालमा भेट्न आउनेहरूसँग पनि राम्ररी चिनेर बोल्न थाल्नुभएको थियो । अस्पतालको शय्यामा उपचार गराइरहँदा पनि उहाँले कहिल्यै पनि हजुरबुवाको बारे सोध्न छाड्नुभएको थिएन । भन्नुहुन्थ्यो, हजुरबुवालाई आराम छ भनिदिनू । त्यस्तो बिरामी भएको बेला, हजुरआमासँग हजुरबुवालाई पनि भेट्न मन लाग्नु स्वाभाविकै थियो । खाना खाइसकेपछि हजुरबुवाले एक्कासी म पनि आज बुढियालाई भेट्न अस्पताल जान्छु भन्नुभयो । हामी कसैले हजुरबुवाको कुरा नकार्न सकेनौं । सकि-नसकी लौरोटेकी अस्पताल पुग्नुभयो । अस्पतालको शैय्यामा उपचाररत आफ्नी जीवनसंगीलाई देख्दा हजुरबुवाका गहभरि आँसु रसाउन थाल्यो । ८० वर्षको लामो समयसम्म सँगै जीवन बिताएको साथी अस्पतालमा जीवन र मृत्युको दोसाँधमा लडिरहेको देख्दा कसको मन आहत नहोला र ? हजुरबुवा एकनासले हजुरआमाको अनुहार हेर्दै केही बोल्न नसकी बसिरहँदा सबैका आँखा रसाएका थिए ।

एकाएक अस्पतालको कोठामा सन्नाटा छायो । साँक्कसुँक्क पनि निकै मन्द गरी आइरहेको थियो । घरबाट निस्किँदा हजुरबुवाले खल्तीमा राख्नुभएको सिन्दूर हजुरआमालाई लगाइदिनुभयो । यो दृश्यले झन सबै मर्माहत भए । भावुकताले सबै गलेका देखिन्थे । हजुरबुवा र हजुरआमाबीच बिस्तारै कुराकानी हुन थाल्यो ।

'बुढिया, कस्तो छ तिमीलाई ?', हजुरबुवा भन्दै हुनुहुन्थ्यो ।

'आरामै छु, अनि तपाईंलाई कस्तो छ ?' प्रतिउत्तरमा हजुरआमा मधुरो स्वरमा बोल्नुभयो । आफू कमजोर बन्दा हजुरआमा र परिवारका अरूहरूलाई झन् कस्तो असर पर्ला भन्ठान्नुभयो कि के हो, बल्ल हजुरबुवाले अलि कठोर मन पार्दै उत्तर दिनुभयो- म त आरामै छु तिमीलाई पनि आराम हुन्छ । बिसेक भएपछि घर फर्कनुपर्छ ।

हजुरबुवा र हजुरआमाबीच त्यस्तै पाँच मिनेट जति कुरा भयो । यति भनेर हजुरबुवाले हजुरआमासँग बिदा माग्नुभयो- अब म घर जान्छु घरमा नै भेटौंला भनेर । तर हजुरबुबाको यो वचन पूरा हुन सकेन । हजुरआमासँग हजुरबुवाको यही नै अन्तिम भेट र संवाद बन्न पुग्यो ।

तर त्यो दिन हजुरआमा अन्य दिनको तुलनामा केही आराम जस्तो देखिनुहुन्थ्यो । सबैसँग बिस्तारै बोल्न सक्ने अनि केही खान सक्ने हुनुभएको थियो ।

उपचारको पाँचौं दिनपछि उहाँमा निकै सुधार भएको थियो । सबैले अब हजुरआमालाई निको हुँदै गयो, अब घर लैजानुपर्छ भन्दै थिए । सबै जना अस्पतालमा भेट्ने र जाने क्रम रह्यो । त्यस रात हजुरआमालाई कुर्न ठूली दिदी, कान्छी दिदी र कान्छी काकी अस्पतालमा बस्नुभयो । खाना खुवाइसकेपछि हामी सबैजना घर फर्केका थियौं । हजुरआमालाई निको भयो, अब भोलि बिहानै अस्पतालबाट डिस्चार्ज गरेर घर लैजाने तयारी गर्नुपर्छ भन्दै हामी छलफल गरिरहेका थियौं । सबैमा खुसी छाएको थियो ।









भोलिपल्ट अर्थात् अस्पतालको छैटौं दिन । बिहानै म र आमा दिदीहरू र काकीलाई पालो दिन अस्पताल पुग्यौं । काकीले घरमा गएर खाना पकाउनुपर्ने थियो । ठूली दिदी पनि हजुरआमाको लागि खाना पकाउन आफ्नो घर जानुभयो । अस्पतालबाटै म अफिस जानुपर्ने थियो, दिउँसो २ बजे पुग्ने गरी । त्यति बेलासम्म म अस्पतालमै बस्नुपर्ने थियो, किनकि काका अस्पताल आइपुगिसक्नुभएको थिएन । म हजुरआमासँग कुरा गर्दै थिएँ । उहाँले आज मलाई निद्रा लागिरहेको छ भन्नुभयो र सुत्नुभयो । केहीबेरमा बिनु दिदी पनि हजुरआमा भेट्न अस्पतालमा आइपुग्नुभयो । हजुरआमा निदाइरहेकाले हामीले पनि बोलाएनौं । बिनु दिदी र आमा अस्पतालको बेड नजिकै बसेर गफ गर्न लाग्नुभयो । त्यति बेला दिउँसोको पौने १ बजेको थियो । काका पनि अस्पतालमा आइपुग्नुभयो, तर अहिलेसम्म खाना खानुभएको रहेनछ । हजुरआमाको लागि खाना लिन र आफू पनि खाना खान उहाँ बाहिरिनुभयो ।

म बिस्तारै अफिस जाने तयारीमा थिएँ । २ बजे अफिस पुग्न बेर होला भनेर हजुरआमासँग बिदा मागैं- आमै, म अफिस गएँ, बेलुकी आउँछु है ।

मेरो प्रश्नको मलिन स्वरमा जवाफ दिँदै 'हुन्छ बेलुकी आउनू है' भन्नुभयो । म झोला लिएर आंमा र दिदीसँग 'हजुरआमालाई के हुन्छ खबर गर्दै गर्नु है' भन्दै बाहिरिने तर्खरमा थिएँ । त्यतिबेला हजुरआमाका दुवै आँखाका परेला बिस्तारै खुल्न थाले । मैले त्यस कुरामा उत्तिको चासो नदिए पनि अचम्ममा परेको थिएँ, हजुरआमाका परेला किन आज एक्कासि खुल्न थाले ? किनकि हजुरआमाका दुवै आँखा बन्द भएको त तीन वर्ष बितिसकेको थियो ।

केही समयपछि उहाँ केही छटपटिनुभयो । ए बाबु, हजुरआमालाई के भयो ? भन्दै आमा र बिनु दिदी एक्कासि कराउन थाल्नुभयो । मैले तत्काल डाक्टरलाई बोलाएँ । उनीहरूले हजुरआमालाई कृत्रिम श्वास दिन थाले । सोही बेला ठूली दिदी हजुरआमाको लागि खाना लिएर ढोकामा आइपुग्नुभएको थियो । उहाँ पनि चिच्याउँदै हजुरआमाको छेउमा आइपुग्नुभयो । काका अस्पतालबाट बाहिरिनुभएको ५ मिनेट पनि बितेको थिएन । मैले तत्काल फोन गरी हजुरआमालाई अप्ठेरो भयो, तुरुन्तै अस्पताल आउनुपर्‍यो भन्दै काकालाई खबर गरेँ । आमा र दिदी दुवै आत्तिइसक्नुभएको थियो । उहाँहरू दुवैलाई सम्झाउन थाले । एकातिर हजुरआमाको अवस्थाले म आफैं दुःखी थिएँ । तर पनि कठोर मन पारेर सम्झाउने प्रयास गरेँ ।



उहाँहरू दुवैलाई बाहिर लैजान डाक्टरले मलाई निर्देशन दिए । उहाँहरूलाई कर गरेरै भए पनि अस्पताल बाहिर राखेर हजुरआमा भएको ठाउँमा पुग्दा हजुरआमालाई बचाउन चिकित्सकहरू अन्तिम प्रयास गरिरहेका थिए । तर उनीहरूको यो प्रयास निरर्थक सावित हुन पुग्यो । 'माफ गर्नुहोला, तपाईंको हजुरआमालाई बचाउन सकेनौं' भन्दै उनीहरू बाहिर निस्किए । म भक्कानो छुटाउँदै रुन मात्र सकेको थिइनँ, पीडा जति सबै घाँटीमै गाँठो परे जस्तो भयो । काका पनि त्यही बेला आइपुग्नुभयो । काकाले आफ्नो मनलाई कठोर पार्दै गाउँका सबै आफन्तजनलाई फोन गरेर बोलाऊ भन्नुभयो । मैले क्रमशः सबै जनालाई फोन गरेर अस्पताल बोलाएँ । सबैजना एक घण्टाभित्र अस्पतालमा जम्मा भइसकेका थिए । हजुरआमाको अन्तिम संस्कारका लागि अस्पतालबाट सबै प्रक्रिया सकेर पशुपति आर्यघाट लैजान सबै जना जुटेका थियौं । त्यही बेला म र वसन्त दाइ अन्तिम संस्कारका लागि आवश्यक पर्ने सामग्री लिन सिनामंगलको घरमा पुगेका थियौं । त्यसबेला आफैंले चलाएको मोटरसाइकलको गति पनि अनुमान गर्न सकेको थिइनँ । घरमा पुगेर सबै सामग्री तयार पार्न कान्छी काकीलाई आग्रह गरी हजुरबुवा भएको ठाउँमा पुगेँ । हजुरबुवाले एक्कासि सोध्नुभयो मलाई, 'हजुरआमाको स्वास्थ्य स्थिति कस्तो छ ?' हामीले अरू सबैलाई खबर गरे पनि हजुरबुवालाई साँचो कुरा भन्न सकेका थिएनौं । यो बज्रपातले उहाँमाथि के बित्ला भन्ने अनुमान गरेर केही पछि भनूँला भन्दै कुरा लुकाएका थियौं ।

हजुरबुवाको प्रश्नले मलाई बडो अप्ठेरोमा पार्‍यो । मैले ठीकै छ भनेर ढाँटें । हजुरबुवाले फेरि भन्नुभयो, मैले बुढियाको स्थिति राम्रो देखेको छैन, अस्पतालमै







भए पनि वैतरिणी गरिदिनू भन्नुभयो । मैले जवाफ दिन सकिनँ । त्यही बेला वसन्त दाइले हजुरबुवालाई भनिदिनुभयो, आमा त बितिसक्नुभयो ।

हजुरबुवा मुख एकाएक अँध्यारो भयो । 'ए, बितिसकी !?' मात्र भन्न सक्नुभयो । तिमीहरू कोही पनि नरोऊ, तिमीहरू रोए मेरो पनि आँसु आउँछ भन्दै सम्हालिने बाटो खोज्दै सम्झाउन थाल्नुभयो । हजुरबुवाले त्यसरी आफूलाई सम्हालेपछि हामीले उहाँलाई सम्झाउनु परेन । त्यसपछि हामी सबै सामग्री लिएर अस्पताल पुग्यौं । अन्तिम कार्य सकेर अस्पतालको शव वाहनमा हजुरआमाको पार्थिव शरीरलाई राखेर सबैजना पशुपति आर्यघाटतर्फ लाग्यौं । अब यी सबै कुरा यादमा मात्र सीमित बन्न पुगेका छन् । आखिर संसार विगत हेर्दै आफैं पनि विगत बन्ने न हो । सायद यी कुरा मनन गर्ने हो भने जिन्दगी सन्तोषको काटो बन्छ । नत्र त बेचैनी र छटपटीले मात्र व्याकुल बनाइरहन्छ मनलाई ।

हजुरआमाले हामी सबैलाई छाडेर सदाको लागि जानुभयो, यो सत्य स्विकार्न करै लाग्यो । विधिको विधान यस्तै हो भनेर चित्त बुझाएँ । हजुरआमाको याद भने वरिपरि नै छरिएको पाउँछु । आजभोलि कुनै वृद्व महिला देख्दा पनि उनै हजुरआमाको यादले सताउँछ ।

हजुरआमा आज पनि भइदिएको भए मलाई उसैगरी माया गर्नुहुन्थ्यो होला । एउटा सानो मिश्रीको टुक्राको झझल्को सधैं आउँछ, कुराउनीको गमक्क बास्ना उस्तै गाढा छ अझै । म आज पनि स्मृतिबाट जब उहाँको हात मेरो शिरमाथि पाउँछु, मनमनै भन्छु- मेरो यात्राभरिको अवरोध हजुरआमाको यही आशिष्ले गलाइसकेको छ । उहाँबाट पाउने स-साना तर मूल्यवान उपहारहरू कहिल्यै बिर्सिन सक्दिनँ । मेरो उमेर पनि बढ्दैछ, । भोलि मेरो पनि हजुरबुवा र हजुरआमाको जसरी नै हाँगाबिँगा फैलिएलान्, म पनि हजुरबुवा बनूँला । तर, के म सक्छु होला त्यसरी सबैको लागि उत्तिकै माया पुऱ्याउन ? मेरी हजुरआमाले त मलाई शिक्षा दिनुभएको छ, सबैलाई माया गर, सबैको लागि उत्तिकै आत्मीय होऊ, उत्तिकै न्यानोपन बाँड... ।



# प्यारी हजुरआमा



प्रज्वल वस्ती

म सानो भएको कारणले गर्दा हो कि किन हो आमाले मलाई केही गर्नु भएन । म हजुरआमाका नाति-नातिनामध्ये सबैभन्दा कान्छो र सानो थिएँ । मलाई याद छ मैले मामाघरमा गएर गरेका कामहरू । एक दिन काउलेमा मैले गोलभेडाको बोट भाँचे अनि नास्पतीको बुटो पनि काटिदिएको छु । त्यसदिन हजुरबाले मलाई यो खोप्लाडी कालेनाति भन्नुभयो तर आमाले हजुरबुवाले भनेको सुनेर होकी, मैले गरेको देखेर हो केही भन्नु भएन ।

उहाँ मलाई हेरेर हाँसी रहनुभएको थियो । उहाँलाई मैले बोलाउँदा-बोलाउँदा आमाले मलाई 'ज्यू' भन्नुहुन्थो । उहाँको यो शब्द सुन्दा म अकमक हुन्थ्ये । विनम्र स्वभावकी बूढीआमाले मलाई किन 'ज्यू' भन्नुभएको हो जस्तो लाग्थ्यो र अहिले पनि लागि रहेको छ । ❀







# हाम्री प्राण प्यारी, मेरी हजुरआमा



शीतल धिताल

सम्झना यस्तै हो, जति सम्झिएर पनि लामो हुने । कति सम्झनाले माया झल्काइदिन्छ, त कति सम्झनाले मुटुमा धक्का पुऱ्याएर जान्छ । आज म मेरी प्यारी हजुरआमालाई सम्झिन पुगें भने, मुटुमा ठूलो धक्का लागेको महसुस गर्छु । म सानो छँदादेखि उहाँसँग बिताएका पलहरू धेरै छन्, जब मैले मान्छे चिन्न सक्ने भएँ, त्यो बेलादेखि अहिलेसम्म उहाँसँग बिताएका पलहरूले आज पनि जीवनमा अगाडि बढ्न उत्साहित पार्दछ । उहाँको सानो, बाटुलो, गोरो अनुहार, अनि मसिना दाँत, चम्किलो कपाल, अनि नरम बोली, मीठो मुस्कान उहाँका व्यक्तिगत अविस्मरणीय सम्पत्ति हुन् । मानिस जब यस धर्तीमा पाइला टेक्न पुग्छ, त्यसपछि उसले आफ्नो जीवनयात्रा सकेर अन्त्यमा स्वर्गलिन हुनुपर्छ, यो जीवनको चक्र नै हो ।

आज मेरो प्राण प्यारी हजुरआमा बित्नुभएको पनि १ वर्ष भएछ । उहाँसँग बिताएका, जिस्कँदै र ठट्टा गर्दै बिताएका पलहरू सम्झँदा पनि मन त्यसै रमाइलो हुन्छ । अनि उहाँको दु:ख सुखमा आफू रमाउँदाका दिन आज सम्झँदा पनि रमाइलो लाग्छ । सानो छँदा मैले धेरै दु:ख दिएको थिएँ रे, म खाना खान धेरै असजिलो थिएँ भनेर उहाँले मलाइ दिनहुँजसो भन्नुहुन्थ्यो । दाल दिनहुँजसो बनाउनुहुन्थ्यो । मस्यौरा, दाल, मिस्री, गुलिया चकलेट मलाई धेरै मन पर्दथ्यो । मेरै लागि भनेर उहाँले चकलेट, मिस्री लुकाएर राखिदिनुहुन्थ्यो । गुलिया चीज धेरै खाने हुनाले मलाई स्वाटै कमिलो भन्नुहुन्थ्यो । बालककालमा म दही, डडेको दूध, प्याज, गोलभेडा खाँदिनथें, आज पनि केही खान्छु, केही अझै मन पर्दैन । आज सम्झँदा पनि सानोमा उहाँलाई धेरै दु:ख दिएको रहेछु भन्ने भान हुन्छ ।



हामी सबै नातिहरू सानैदेखि उहाँको काखमा हुर्कियौं । उहाँ हामी नातिलाई धेरै प्यारो गर्नुहुन्थ्यो । हजुरबा, हजुरआमाले हामी नातिलाई दिएको माया, अनि उहाँहरूसँग बिताएका पलहरू धेरै मीठा लाग्छन । हजुरबाले पकाउने पहेंलो जाउली, जाउलो खाने ठूलो आल्मोनियमको थाल, अनि हामी चारजना नातिलाई जाउलो खुवाउने बहानामा सारक, बिरालो सँगसँगै बिताएका ती बाल्यकालका दिनहरू सम्झन खोज्दा पनि धेरै मीठा लाग्छन् । म सानो उमेरमा खाना खान धेरै गाह्रो थिएँ रे, एकदिन जाउलो खुवाउँदै गर्दा म भागेर गएर डिलमा पुगें रे अनि हजुरबाले पिटिदिनुभयो अरे । आज पनि हजुरबा ती मीठा क्षण सम्झाइरहनुहुन्छ, उहाँले कहिल्यै पनि हामी नातिलाई काम गर्न लगाउनुहुन्नथ्यो, आमा/ममीहरूले हामीलाई काम लगाउँदा पनि उहाँहरू कराउनु हुन्थ्यो । नातिहरूलाई दु:ख नहोस् भन्ने चाहनुहुन्थ्यो ।

**उहाँको सानो, बाटुलो, गोरो अनुहार, अनि मसिना दाँत, चम्किलो कपाल, अनि नरम बोली, मीठो मुस्कान उहाँका व्यक्तिगत अविस्मरणीय सम्पत्ति हुन्**



हजुरआमा सबैलाई को आफ्नो, को अर्को भेदभाव गर्नु हुन्नथ्यो । मीठे कामीदेखि आन्टे कामी सबैको मन जित्नुभएको थियो । सानोमा छँदा पाँडेको बारी, बिसीको गरोमा नातिलाई सँगै ल्याउने अनि नातिहरूसँगै जिस्कँदै दिन काट्नु उहाँको दैनिकी थियो । उहाँसँग ठूलो हुँदा बिताएका पलहरू भन्दा पनि, सानोमा गाउँपाखामा उकाली ओरालीमा बिताएका पलहरू धेरै प्यारो अनि अविस्मरणीय लाग्छ । उहाँले मकै भुट्दा गुनगुनाउने गीत, श्लोक आज पनि गुनगुनाइरहन मन लाग्छ । "जाऊ न भानिच, जाउ न भानिच"..... उहाँले गुन्जाइरहनुहुन्थ्यो । यो गीत उहाँलाई कहिलेकाहीँ गाएर जिस्काइदिन्थें, अनि मलाई उहाँले जिस्कँदै गौंडे भन्नुहुन्थ्यो । गौंडे भन्ने उपनाम उहाँले नै राखिदिनुभएको थियो ।

उहाँसँग बिताएका पल धेरै छन्, जुन यो पानामा उतार्न सम्भव छैन । उहाँ आज हाम्रो रमाइलो परिवारमा हुनुहुन्न । अब हाम्रो सुख दुःखमा साथ दिन आउनुहुन्न । उहाँ हामी नातिनातिनाको बिहे हेर्न चाहनुहुन्थ्यो । हाम्री ठूलीदिदी विमलाको बिहे हुँदा उहाँ धेरै रमाउनुभएको थियो । कहिलेकाहीँ आमैलाई म पनि यही मंसिरमा बिहे गर्छु भनेर जिस्काइदिन्थे, उहाँ मसिना दाँत देखाएर हाँसिरहनु हुन्थ्यो, गएको २०६६ सालमा उहाँसँग जिस्किएका पलहरू सम्झिएर आज हाँस्न खोज्छु, तर कता-कता पाउदिनँ । उहाँ सुत्ने कोठामा गएर हेर्छु उहाँ सुत्ने खाटमाथि उहाँको तस्बिर हाँसिरहेको छ, उहाँको तस्बिर हेर्दै उहाँसँग बिताएमा मीठा पल सम्झिनु मेरो अनि हाम्रो परिवारको बाध्यता भएको छ । हाम्रो परिवारको दुःखमा कहिल्यै नआत्तिन सुझाव दिइरहनुहुन्थ्यो । उहाँले अन्तिम बिरामी क्षणमा भन्नुभएको थियो । "यति प्यारो सुन्दर बगैंचा आज छाडेर जानुपर्ने भयो, कोही नरुनु, हजुरबालाई हेला नगर्नु आदि आदि""। आज उहाँले बनाउनुभएको सुन्दर बगैंचामा उहाँ नभए पनि उहाँले गर्नुभएको मलजलले फूलहरू फक्रँदै सुगन्ध छरिरहेका छन् । हामी फुलेको, फक्रेको, उहाँले माथिबाट हेरिरहनुहुनेछ सदा-सदाका लागि माथिबाट, हस्ततारा बनेर.........। ❀



# ठूली आमाको सम्झनामा

**तारा भट्ट धिताल**

*मनासलु हिमाल र हिउँचुलीको*
*चिसो हावा बहने तान्द्राङको काउले गाउँमा*
*ममतामही मातृत्व दिने मेरी ठूली आमा*
*मध्यमा हुनुहुन्थ्यो साइंलीमा*

*धिताल परिवारको रमझममा*
*हुर्किएका हामी छोराछोरी*
*ताजा छ स्मरणका त्यो क्षण*
*दादा दिदी काका काकी वा आमा*

*सानो ठूलो सवमा थियो भित्र भावना*
*दाउरा घाँस मेला पात स्कुल पनि पुग्न*
*अन्न फलाउथ्यौं स्कुलमा रमाउथ्यौं*
*प्रेरणा थियो हामीमा अग्रज र वा आमाको*

*तोते बोल्दा देखि सेवा गर्ने*
*ठूला हुन्जेल अर्तिउपदेश दिने ठूली आमा*
*झरीलो जीवन काउलेमा विताउदै*
*अन्तिम घडीमा शहरपुग्नु भयो ठूली आमा*

*के दिन सकियो र आमाको सम्झनामा*
*दुई शब्द संस्मरण आमाको सम्झनामा*
*सुख शान्ति मिलोस आमाको सम्झनामा*
*स्वर्गवासी आमाको सम्झनामा*
*स्वर्गवासी आमाको सम्झनामा* ❀









# जन्माउने आमा, हुर्काउने हजुरआमा



सिद्धार्थ धिताल

सदाझैं बिहान उठेर घरबाट निस्कने बेला मेरो कानमा एउटा सुमधुर आवाज सुनिने गर्थ्यो 'बाबु जान्छौ, राम्रोसँग जाउ' दिन भरको कामपछि बेलुका घर फर्कन्छु फेरि त्यस्तै आवाज आउँछ 'बाबु आयौ' म यस्ता आवाज नियमित सुन्ने गर्थें। बिहान म जाँदा दिनभरको काम सफल रहोस् भनेर आर्शीवाद दिने र बेलुकी म आउँदा खुसी हुने अरू कोही थिएन। म ढिलो आउँदा पीर गरेर मम्मीसँग त्यो कहिले आउँछ भनेर सोधिराख्ने आवाज अरू कसैको थिएन, त्यो मेरो प्यारी हजुरआमाको कर्णप्रिय आवाज थियो।

तर अहिले म जब बिहान निस्कन्छु, त्यसबेला त्यो आवाज मसँग छैन, बेलुकी फर्कंदा सोध्ने आवाज पनि सुनिँदैन। समयको अन्तरालसँगै ती सुमधुर आवाजहरू हराउँदै गइराखेका छन्। तर हजुरआमा सुत्ने गरेको कोठामा छिर्दा भित्तामा झुन्ड्याइएको तस्बिर हेर्दा त्यो आवाजले बिहान जाने बेलामा र फर्कंदा मलाई बोलाइरहेको भान हुन्छ। अब त यी सबै मेरा लागि सम्झनाका पलहरू बनिरहेका छन्। हजुरआमासँग बिताएका क्षण र पलहरू।

अघिल्लो सालको मंसिर हाम्रो परिवारका लागि सुखद रहेन। परिवारकी शीर, ममतामयी हजुरआमा मंसिरको १४ गते हामी सबैलाई छाडेर जानुभयो। उहाँ अब कहिल्यै नफर्कने हुनुभयो। हजुरआमाको सम्झना कम होइन अझ धेरै हुन थालेको छ। ती आशिर्वचनहरू कहिले सुन्ने होला। अब मेरा कानमा ती आवाजहरू ठोकिइराखेका छन्। ती आवाज यादमा सीमित भएका छन्।

पहिलो वार्षिक श्राद्धको तयारीमा छौं, तर हजुरआमाका सम्झनाहरु अझ ताजा भएर आउँदै छन्। उहाँ हामीसँगै भएको जस्तो लागिरहन्छ। प्रकृतिको नियम नै हो, मान्छे जन्मेपछि मर्नुपर्छ नै। यो कुरा पनि मलाई हजुरआमाले नै सिकाउनुभएको हो। यो कुरा भन्न सजिलो नै हुन्छ। तर आफूलाई परेपछि मात्र थाहा हुँदोरहेछ। यो त अरूलाई भन्नेमात्र रहेछ। हजुरआमालाई सम्झँदा सोच्न थाल्छु मान्छे किन मर्छ।

एक वर्षअघि ८६ वर्षको उमेरमा हजुरआमाको निधन जुन अवस्थामा भयो त्यो कमै मान्छेले मात्र पाउँछन्। सबै परिवारको बीचमा हामीलाई आशिर्वचन दिंदादिंदै, छोराछोरी, नातिनातिना र सबै परिवारको उन्नति र प्रगतिको कामना गर्दागर्दै उहाँले यो भौतिक शरीर छाडेर जानुभयो यो कमैलाई मात्र प्राप्त हुने अवसर हो। आखिर हजुरआमाले नै हामीलाई सम्झाउनुभएको कुरा हो, मान्छे जन्मेपछि मर्नुपर्छ भनेर।

एउटा नातिलाई आफ्नो हजुरआमा अवश्य प्यारो लाग्छ, तर पनि मेरा लागि उहाँ हजुरआमामा मात्र सीमित नभएर आमा नै हुनुहुन्थ्यो। मेरा हरेक इच्छा र आकांक्षालाई पूरा गर्ने कोसिसमा लाग्ने सधैं न्यानो माया र स्नेह दिइराख्ने।

**हजुरआमाका आशिर्वचनहरू मेरा कानमा ती आवाजहरू ठोकिइराखेका छन्**



म जान्ने भएको बेलादेखि काठमाडौं बसाइसम्म पनि बीचका केही वर्षबाहेक अधिकांश समय उहाँको सामीप्य पाइराखें। संयुक्त परिवारको पहाडी पृष्ठभूमिमा हुर्किएको म। ममीले सधैं मेरो ध्यान राख्न सक्ने कुरा पनि भएन। बिहान काममा गएपछि साँझमात्र ममीलाई देख्न पाइन्थ्यो। त्यसैले मैले ममीसँग भन्दा हजुरआमासँग बाल्यकालका धेरै पल बिताएको छु। उहाँले दिनुभएका अर्ती उपदेश र आशीर्वाद मेरो जीवनपथका मार्गदर्शक भइरहन्छन्।

मैले चिनेको हजुरआमा एक शब्दमा भन्दा अरूको कुभलो नचिताउने हुनुहुन्थ्यो। उहाँ सधैं राम्रोमात्र देख्नु हुन्थ्यो। उहाँले आफूले दुःख गरेर परिवारका अन्य सदस्यलाई अघि बढ्न प्रेरणा दिइराख्नुभयो। परिवार मोह भनौं वा केही अन्तिम क्षणमा नातिनातिनाको बिहे हेर्ने र सुन्ने इच्छा थियो। आंशिकरूपमा पूरा भए पनि उहाँको त्यो इच्छा पूर्णरूपमा भने पूरा हुन पाएन।

बलवान् समय निष्ठुरी पनि छ। समयसँग कसैको केही लाग्दैन। तर अब बितेका दिनको यादमा रुमलिरहनुभन्दा हजुरआमाको इच्छा र आकांक्षालाई पूरा गर्दै उहाँको नामलाई अझ उज्ज्वल बनाउनतर्फ लाग्नुपर्छ जस्तो लाग्छ मलाई। ❀

# माइतीघरको सम्झना



कमला बञ्जारा

मेरो माइती घरको नाम लिनासाथ मलाई यस्तो लाग्छ फेरि अर्को जन्म लिन पाएँ भने म भगवान्सँग वरदान माग्छु कि म फेरि त्यहीं परिवारमा छोरी भएर जन्म लिन पाऊँ। किनकि मेरो माइती घरपरिवार सधैं संस्कारले सम्पन्न थियो र छ पनि।

त्यहीं संस्कारले मुछिएर र त्यही संस्कारको आगोले पोलिएको बलियो भाँडो, त्यही भाँडो कसैले नराम्रो भनेर फुटाउने साहससम्म पनि गरेको छैन। जहाँ-जहाँ हाम्रो परिवारका छोरी चेली पुगेका छौं जस्तोसुकै दुःख कष्ट आइपरे पनि पिता पुर्खाले सिकाएको संस्कारी बाटो हिँड्दै जाँदा अप्ठ्यारा आफैं हराउँदै जान्छन्। धेरै रमाइलोसँग बित्यो माइतीघरको मायामा बाल्य अवस्था मेरो।

हजुरआमा, हजुरबुवा, आमाबुवा, काकाकाकी, सबैले सधैं राम्रो बोल्न र राम्रो बाटो हिँड्न मात्र सिकाउनु हुन्थ्यो। सबैले धेरै माया गर्नुहुन्थ्यो। के गर्ने सृष्टिको नियम नै यस्तै छ। वृक्षको पात पनि समय आएपछि झर्नुपर्छ। यो विधिको नियम नै हो। मेरो हजुरबुवा र हजुरआमाहरू पनि भगवान्को प्यारो भएर भगवान्को पास स्वर्गमा जानुभयो। यो संसारको रीत नै हो। यसमा हामीले दुःख मानेर केही हुँदैन। हजुरआमाको सारै याद आउँछ। उहाँ स्वर्गवास हुनुभएको एक वर्ष बितिसकेछ। गत वर्षको दसैंमा राम्रो होस् भनेर आशिष दिनुभएको कानमा गुन्जिरहेको जस्तो लाग्छ। मलाई मेरो माइतीको धेरै-धेरै याद आउँछ। हजुरआमाको वार्षिक पुण्यतिथिमा उहाँप्रति हार्दिक श्रद्धाञ्जली। ❀







# अन्तिममा भेट्न पाइनँ



प्रशान्त वस्ती

नेपाल छोडेर परदेशिएको पनि डेढ वर्ष जति हुन लागेछ। तर पनि नेपालको सम्झना आइनै रहन्छ। जापानको टोकियोमा बुबा र म बस्छौं तर अधिकांश सयम कुरा भने नेपाल र आफ्नो घर परिवार र आफन्तकै हुन्छ।

म काठमाडौंबाट विदेशको लागि निस्कनलाग्ला मेरो टाउकोमा हात राखेर आशीर्वाद दिने मेरी मामाघरकी हजुरआमा अहिले हामीमाझ हुनुहुन्न। उहाँले हामीलाई छोडेर गएको पनि एकवर्ष भईसक्यो। तर मेरो लागि त उहाँ सिनामंगलको घरमा नै हुनुहुन्छ जस्तो लागिरहन्छ।

उहाँको वार्षिक पुण्यतिथिको अवसरमा एउटा स्मारिका निकाल्ने कुरा धेरै पहिले दाइ र भाइबाट जानकारी प्राप्त भइराखेको थियो। मैले पनि उहाँको सम्झनामा केही हरफहरू लेख्नुपर्ला भन्दै थिएँ। तर त्यसलाई पूरा गर्न सकिराखेको थिइनँ। तर हजुरआमाजस्तो महान व्यक्तिलाई सम्झन पाउनु पनि मेरो भाग्यको कुरा जस्तो लाग्छ।

मैले हजुरआमाका जीवनका अन्तिम समयभन्दा धेरै अघि संगत गर्ने लामो मौका पाइनँ। मेरो घर र मामाघरको दूरी अलिक बढी नै भएकोले सधैं मामाघर पुग्न गाह्रो हुन्थ्यो। तर जुन बेला मामाघर जाने कुरा आउँथ्यो, त्यो बेला मेरो खुसी नै बेग्लै हुन्थ्यो। लामो बाटो आफ्नो उमेरका कारण पूरै हिंडन नसकेपछि मामाको काँधमा बसेर जान पाउनुको मज्जा पनि धेरै नै हुन्थ्यो। फेरि मामाघरमा मेरो समकालीन दाजुभाइहरू धेरै नै भएकोले अर्को रमाइलो लाग्थ्यो।

म सानोमा अलिक चकचके थिएँ जस्तो लाग्छ। मामाघर पुगेपछि मैले भाँडा हातमा लिएर मामाघर भन्दा तलको गह्रामा फालेको याद छ। म भाँडा फाल्थें मामाघर हजुरआमाले हांस्दै त्यो भाँडा ल्याउनु हुन्थ्यो। उहाँ हाँसेको देखेर म फेरि भाँडा फाल्ने प्रयासमा हुन्थें। त्यो वेला यस्तो गर्नु हुदैन पराइले लैजान्छ भनेर उहाँले सम्झाउनु भएको मलाइ याद छ।

पछि काठमाडौंमा उच्चशिक्षा हासिल गर्न आउँदा पनि मेरो बसाइ मामाघर नजिक नै भयो। ममी र वुवा दुवै विदेश जानुभएपछि म र भाइ मामाघर नजिकै कोठा लिएर बसेका थियौं।

म मामाघर पुगिरहेको हुन्थें। त्यस बेला पनि हजुरआमाले म र भाइको पढाइ, हाम्रो बसाइ र हामीले खाए नखाएको बारेमा सोधि रहनुहुन्थ्यो। नबिग्रन र सधैं असल बाटोमा लागिरहन अर्ति दिइरहनुहुन्थ्यो। उहाँ आफ्ना सन्तान असल बाटोमा लागिरहनु भन्ने सोचिरहनुहुन्थ्यो। अब त उहाँ हाम्रोबीच हुनुहुन्न तर पनि म उहाँलाई सधैं सम्झिरहेको छु। परदेशबाट हजुरलाई हार्दिक श्रद्धाञ्जली !!!





# काउलेको हजुरआमा



शर्मिला भट्ट

धेरै बाक्लो गाउँ छापथोकमा २०४८ सालमा जन्म लिन पुगें। मलाई आज पनि आफू जन्मेको डाँडापाखा, उकाली ओरालीमा पसिना पुछ्दै ठूलो चौतारीमा सुस्केरा हालेका दिन सम्झिँदा पनि मन धेरै आनन्दित हुन्छ। कसलाई पो आफ्नो गाउँघरमा प्यारो लाग्दैन र। परिवारकी जेठी नातिनी भएर परिवारमा सबैको प्यारी थिएँ। धेरै ठूलो परिवारमा सबैको प्यार पाएकी थिएँ। फुपूहरू ५ जना हुनुहुन्थ्यो, सबै फुपूहरूको घर धेरै टाढा थियो, उहाँहरू चाडपर्वमा आउनुहुन्थ्यो, उहाँहरू आएका बेला घरमा धेरै रमाइलो हुन्थ्यो, सबैभन्दा नजिक ठूली फुपूको घर थियो , उहाँको घर काउले जुन मेरो स्कुलदेखि नजिक थियो। म स्कुल पढ्दा घ्याम्पेसालका ती उकाली ओरालीमा अनि कच्ची धूले सडकमा बिताएका क्षण हिजो जस्तै लाग्छ।

घ्याम्पेसाल पढाइका क्रममा शुक्रबार होस या लामो बिदाका दिन काट्न म मेरी ठूली फुपूको घर काउले जान्थें, फुपूहरूको छोराहरू सबै काठमाडौं हुनुहुथ्यो। काउलेको घरमा फुपू, फुपुका सासू-ससुरामात्र हुनुहुन्थ्यो। ठूला, फराकिलो गह्राहरू अनि चिसो हावापानी मलाई धेरै मन पर्दथ्यो। काउले आवतजावत गर्दागर्दै काउले गाउँमा धेरै साथी भएका थिए जसले गर्दा पनि काउले गाउँप्रति मेरो आत्मीयता झन् प्रगाढ बन्दै थियो। म काउले पुग्दा हजुरआमा, हजुरबामात्रै बसिरहनुभएको हुन्थ्यो। दिदीचाहिँ मेलापातमा हुनुहुन्थ्यो। उहाँहरूको ठूलो परिवार भएर पनि बुढेसकालमा घरमा कोही नहुँदा मेरो मनमा पनि खल्लो महसुस हुन्थ्यो। हजुरआमाले घरमा दिदीले राख्दिनुभएको खाजा दिनुहुन्थ्यो, अनि नातिनातिनाका कुराहरू, गाउँका पानीपँधेरा, अनि उकाली ओरालीमा मेलापात गरेका पलहरू सम्झिएर आफैं गुनगुनाइरहनु हुन्थ्यो। म पनि स-सानो काममा सघाइदिन्थें। हजुरबाले कुँडो पकाउँदा, पानी, च्याख्ला ल्याएर सघाइदिन्थें। हजुरआमा त्यस्तो सानो काम सघाइदिँदा पनि हजुरबालाई कराउनुहुन्थ्यो म स्कुल पढाइका क्रममा हरेक शुक्रबार जसो म काउले जान्थें, कुनै दिन काम परेर काउले नजाँदा उहाँले सोधिरहनुहुन्थ्यो रे। म स्कुल छाडेर जब म कलेज पढ्ने सुरसार गर्दै थिएँ एक दिन हजुरआमा काठमाडौं आँखाको उपचार गराउन जाँदै हुनुहुन्छ भन्ने खबर पाएँ, अनि उहाँ आउँदै गरेको बस घ्याम्पेसाल हुँदै मेरो गाउँ छापथोक आएर रोकियो, मैले पहिले नै थाहा पाएको थिएँ त्यस बसमा शीतल दाइ, शारदा भिनाजु भएर हजुरआमालाई दिएर आउँदै हुनुहुन्छ भनेर। उहाँहरू आएको बस हेर्न म घरमाथिको रोडमा उक्लिएर बसिरहेको थिएँ, कच्ची बाटोमा धूलो उडाउँदै गाडी आइरहेको थियो, गाडीमा ठूलो आवाजले गीतहरू घन्किरहेको थियो.......। बसनजिकै आएर रोकियो। शर्मिला शर्मिला परबाट आवाज सुने, मलाई बोलाउने शीतल दाइ हुनुहुदोरहेछ। हजुरआमा पछाडि बस्नुभएको रहेछ। म उहाँसँग बोल्न पाइनँ, उहाँ त्यति राम्रोसँग कान सुन्नु हुँदैनथ्यो। त्यसैले मैले उहाँलाई बोलाउन पाइनँ, उहाँसँगको त्यो भेट नै मेरो अन्तिम भेट हुन पुग्यो। ती क्षण आज पनि आँखामा झल्झली नाचिरहन्छ। पछि करिब २ वर्षपछि म आफ्नै घरमा बसिरहेका बेला मेरो काकाबाट उहाँ बित्नुभएको खबर पाएँ, म धेरै दुःखी भएँ, मलाई आफ्नै कोही परिवार गुमेको भान भयो। उहाँको उज्यालो अनुहार, सेतो कपाल, मेरो आँखाको वरिपरि डुलिरह्यो। उहाँको नरमपन सायद मैले कसैसँग पनि देखेको छैन, आज म काउले गाउँ देख्दा अनि मेरो मामाघर आउँदा जाँदा पनि उहाँको सम्झनाले सताइरहन्छ। उहाँ समग्र काउले गाउँको नै सम्पत्ति हुनुहुन्थ्यो, काउलीको फूल जस्तो उज्यालो मुहार भएकी हजुरआमा जत्तिको मान्छे काउले गाउँले सायद पाउने छैन। ❀







# मामाघरको सम्झना सुखद अनि अविस्मरणीय



अन्जू देवकोटा

'समयले पर्खदो रहेनछ । सयम आफ्नै नियममा हिडदो रहेछ । मासिसले जति सुकै आविश्कार गरेपनि जतिनै धेरै शीप र शक्ति आर्जन गरेपनि समय मानिसभन्दा अगाडिनै छ । अगाडीनै रहने छ । ' अग्रजहरूबाट सुनेका यि विचारहरू फगत दर्शनमात्र लागेपनि मानिसलाई परेपछि मात्र थाहा हुन्छकि समय कति बलबान हुन्छ, कति निष्ठुर, कति मायालु अनि कति ज्ञानी पनि । समयको यहि नियमलाई पालनगर्दै हाम्रो मामाघरको हजुरआमा पनि हामिवीच हुनु हुन्न । तर उहाँसँग जोडिएका केहि रमाइला सम्झनाहरू, उहाँले दिएका अर्ति उपदेशहरू संधैभरी हामीबीच मार्गदर्शक बनेर रहिरहने छ अन्तिम समय सम्म पनि ।

जव म मेरो मामाघर सम्झन्छु, मैले वाल्यकालमा विताएका ति सारा समयहरू र मेरो ममिले सधै भन्ने गरेको बाल्यकालको घटना याद आउँछ । ममिले भने अनुसार त्यसवेला म २/३ वर्षको थिएँ अरे । जव म चारपाउ टेक्ने भएर अलिअलि खुट्टा चाल्न सक्ने भएको थिएँ, भोक र तिर्खाको कुरा कसैसँग प्रकट गर्न नसक्ने अवस्था र उमेर थियो । त्यतिखेरको सानो बच्चाले आफ्नो भोक सहन नसकेर घरमाथिको तरकारीबारीमा गएर के सफा के फोहर कुनै परवाह नगरीकन भएभरका मुला, सलगम र सागका पातहरू चुडेर मुखभरी बुजा हालेर आफ्नो भोक मेटाएको र ममीले खोज्दै जाँदा किन साग खाएकोनि भनेर सोध्दा मेरो एउटामात्र वाक्य फुटेको थियो रे -'भोक लाएर काका नि' । यो कुरा सम्झदा मलाई सधैभरी रमाइलो अनुभुति हुने गर्छ र म एक्लै हांस्ने गर्छु ।

यो घटनाको दर्शक भएर हजुरआमाले मलाई नियालीरहनु भएको रहेछ र अरू ढुङ्गा, माटो र घाँसपात खानबाट उहाँले मलाई रोक्नु भएछ ।

त्यो दिन हजुरआमाले मलाई नदेख्नु भएको भए मैले सायद अरूपनि सवै फोहर खानेकुरा खान्थें होला र के-के गर्थे होला । त्यसैले गर्दापनि म हजुरआमालाई र उहाँको ममतालाई सजिलै विर्सन सक्दिन ।

जतिबेला म अलि बुझ्ने भएँ र मामाघरको महत्व बुझ्न थालें मलाई राम्रोसँग याद छ कि मैले मेरा बहिनीहरू मन्जू र मेनुलाई साथमा लिएर माथिल्लो घर हजुरआमा भएको ठाउँमा टिका लगाउन जानुपर्छ भन्दै हतारहतार दशैंमा टीका थाप्न गएको, उहाँले हाम्रो कपाल सुम्सुयाउदै दिनुभएका ति आशिष र उपदेशहरू । मिलनसार सहनसील स्वभाव र मायालु व्यवहार मेरो उहाँप्रतिको पहिलो बुझाई थियो ।

सम्झनाका ति पलहरूलाई ताजा गर्दै जाँदा मलाई एउटा अर्को घटनापनि याद आयो । आजभन्दा करिव १० वर्ष अघि जतिवेला म १४/१५ वर्षको थिएँ, त्यतिबेला मामाहरू (सुदर्शन, सन्तोष, सितल र सिद्धार्थ)को ब्रतबन्धको लागि म गोरखाबजार बाट मामाघर गएको थिएँ । त्यसवेला हजुरआमाले मेरा साना हातभरी र खल्तीभरि दिनु भएको त्यो कसार अनि रोटीको स्वाद अझैंसम्म पनि मलाई याद आइरहन्छ । यि सवै घटनाहरू मेरालागि साँच्चीनै अविष्मरणीय छन् ।

समय, परिस्थिती र भौगोलिक चुनौतीका कारणले संधै मामाघर गइराख्न सहज थिएन । फलस्वरूप मैले अझैं त्यति नजिकवाट उहाँलाई बुझ्ने अवसर



पाउन सकिन् । तर पनि मलाई प्यारो लाग्छ मेरो मामाघर, मैले मामाघरमा विताएका ती न्याना पलहरू ।

यस संसार प्रकृतिको नियमद्वारा संचालित छ । कुनैपनि प्राणीले जन्मसँगै मृत्यु लिएर आएको हुन्छ । मृत्यु कसैले टारेर टर्दैन । यो पृथ्वीमा लाखौं करौडौं वर्षदेखि मानिस जन्मदै र मर्दै गरिरहेका छन् । तर हामी आफ्नाहरूको मृत्युलाई सहजढंगले विर्सन सक्दैनौं । हामीले आफ्नाहरूँग विताएका समय स्मृति बनेर संधै हाम्रो अगाडी आई नै रहन्छ । संसारको यही नियममा हामी सवै बाँचि रहेका हुन्छौं ।

फरक यतिमात्र हो कि विगतमा हामीले पाएका ज्ञानगुण, संस्कार, राम्रा आचरणहरूलाई आत्मसाथगर्दै कुन हदसम्म अघि वढन सकिन्छ र आफन्त जनका आत्मालाई कसरी साँचो श्रद्धाञ्जली दिन सकिन्छ । मेरो कोशिष सधैं यहि रहने छ कि मलाई मेरो मामाघर, मेरो हजुरआमा र मेरा पृयजनले दिएका राम्रो संस्कार, उपदेश, व्यवहारिक ज्ञानलाई मननगर्दै मेरा जीवनका हरेक पाइलाहरूमा हरेक अफ्ट्यारा परिस्थितिहरूमा कत्तिपनि विचलित नभई सफल हुन सकौं र अरूकोलागि असल पदछाप छोडन सकौं । हार्दिक श्रद्धाञ्जली हजुरआमा तपाइलाई ।

❀

# सफल जिन्दगी



भास्कर ढकाल

*सुख र सुविधामामात्र*
*के वाँच्नु, संघर्षपो जिन्दगी*
*संसारमा कहिल्यै नभुल्ने*
*अमिट छाप छोडनु पो जिन्दगी*
*वर्खाको खहरे झैं गर्जिनुको कुनै अस्तित्व हुदैन*
*समुद्र झैं सधै धिर गहन हुनु पो जिन्दगी*
*मैले केहि पाइन भनेर किन रोइ रहन्छौं हामी*
*समाजलाई आफुले केहि दिनुपो जिन्दगी*
*काल आउँछ भनी किन बस्नु डराएर*
*रूदै-रूदैं जन्म्यौं हामी हाँस्दै हाँस्दै मर्नु पो जिन्दगी*
*संसारलाई कहिल्यै नभुल्ने छाप छोडनु पो जिन्दगी*
*मान्छेले मान्छेलाई मारेर वीरता देखाइन्छ यहाँ*
*मर्दै गरेको मान्छेको ज्यान जोगाउनु पो जिन्दगी*
*मान्छे भई जन्मिएपछि केहि असल काम गरेर मुर्न पो जिन्दगी*
*संसारले कहिल्यै नभुल्ने अमिट छाप छोडनु पो जिन्दगी*

*कक्षा -७*
*डार्विन एकेडेमी, नयाँवजार*



# आमा



अभिदीप लामिछाने

आमाले हामीलाई जन्म दिनुहुन्छ । पढाउनुहुन्छ, हुर्काउनुहुन्छ र माया दिनुहुन्छ । आमालाई आफ्नो छोराछोरी जस्तो अरू कसैको माया लाग्दैन । हाम्रा लागि आफू भोकभोकै बसेर हामीलाई खुवाउनुहुन्छ । हाम्रा लागि आफू लुगा नलगाई हामीलाई नयाँ लुगा किन्न खोज्नुहुन्छ । आमा हाम्रा लागि भगवान्सरि हुनुहुन्छ । आमाले गरेजस्तो माया अरू कसैले गर्न सक्दैन । सबै आमाको एउटा आशा हुन्छ, मेरा छोराले पढेर केही गर्छ भन्ने । हामीले आफ्नो आमाका लागि पनि केही गर्नुपर्छ ।

मलाई पनि मेरो आमाले धेरै माया दिनुभएको छ । उहाँले मलाई आफ्नो ज्यानभन्दा पनि धेरै माया गर्नुहुन्छ । मेरो आमाले मलाई ठूलो मानिस बनाउन चाहनुहुन्छ । म पनि उहाँको सपना पूरा गर्न चाहन्छु ।

*वीरेन्द्र सैनिक आवासीय महाविद्यालय*
*सल्लाघारी, भक्तपुर*





# श्रद्धाञ्जली हजुर आमामा



इन्दिरा धिताल

मेरी प्यारी साहिली हजुरआमाको स्मृति दिवस पनि आइसकेछ कति छिटो। यो समयको वेगसँगै परिवर्तन भइरहेको मलाई लाग्छ उहाँ आज पनि हामीसामु यो संसारबाट बिदा लिइसक्नुभएको छैन। हातभरि राता चुरा, निधारमा ठूलो रातो टीका, अनि सिन्दुर र फुलेको कपाल सपक्क बनाएर बाँधी हँसिलो अनुहारमा हजुरआमाले आज पनि त्यो गोरखा काउलेको घरमा मलाई 'ईन्दिरा' भनी बोलाइरहेको भान हुन्छ। समयको वेग पनि कति छिटो बग्दोरहेछ। पाँचवटी देउरानी-जेठानीमध्ये साँहिली हजुरआमाको स्मृतिमा दुई शव्द राख्दा पनि अतीतका सम्भनाले सताइरहेको अनुभवलाई यही छातिमा राखी कोर्न बाध्य भएकी छु। मेरी प्यारी हजुरआमासँग २६ वर्षदेखि रहेको अनुभव अनि उहाँले हाम्रो तोते बोलीसँग बोलेको मीठो शब्द 'काली' खै आज किन विलिन छ म आफैंलाई थाहा छैन।

हजुरआमासँग बस्दाको अनुभवहरू कति छन्। उहाँले दिनुभएको अर्तिउपदेश पनि कति छन्। उहाँले हामीलाई सिकाएका हाम्रा संस्कारहरू आज तातै छन्। उहाँ भन्नुहुन्थ्यो, आफू पनि अरुलाई नराम्रो नगर्ने, नराम्रो गर्नेसँग पनि आफू नरिसाउने बानी गर्नुपर्छ। छोरीको जात अर्काको घर जाने भएकोले तिमीहरूको बोली सभ्य र मीठो हुनुपर्छ। मेरी प्यारी हजुरआमाले म बच्चा हुँदा मेरो आमाले छोडेर काममा जाँदा दाइ दिदीभाइहरुलाई पकाएको जाउलो 'ला तँ पनि खा' भनेर दिएको दिन अनि म हजुरआमासँग रुँदै जाँदा खान दिएको छोगडा सम्झन्छु। यति मात्र होइन, उहाँले देखाउनुभएको हृदयस्पर्शी ममतासहित पाँच देउरानी जेठानीहरू सधैं मिलिरहेको र समयसापेक्ष गरेका कुराकानीहरु लाग्छ, अहिले पनि उपयोगी छन्। उहाँ इर्ष्या र लोभमा कति पनि नलाग्ने सन्तोषी र दानी हुनुहुन्थ्यो। मेरी साँहिली हजुरआमा मेरी हजुरआमालाई धेरै माया गर्नुहुन्थ्यो र मेरी आफ्नै हजुरआमा पनि उहाँलाई उतिकै माया गर्नुहुन्थ्यो। मेरी हजुरआमा मिठो चोखो केही पाएमा लुकाएर साँहिली दिदीलाई पुऱ्याउनुहुन्थ्यो भने साँहिली हजुरआमा पनि कान्छीको छोरी छैन त्यसलाई कसले दिन्छ र भनी पुऱ्याउन पुग्नुहुन्थ्यो।

> **उहाँले हामीलाई सिकाएका हाम्रा संस्कारहरु आज तातै छन्**

मलाई याद छ, तिहार भर्खरै सकिएको थियो। कोदो टिप्ने बेला भएको थियो। म पनि हजुरआमासँगै कोदो टिप्न गएको थिएँ। साँहिली हजुरआमाले मेरी हजुरआमालाई चिनी रोटी लुकाएर ल्याई थुन्सेमा हाली तिम्रो छोरी छैन। तिहारमा तिमी माइत पनि गइनौ भनिदिनुभयो। मैले थाहा पाइहालें र तत्कालै मागेर खाएँ र मलाई ठूलो गह्रामा कोदो टिप्न जाँदा मुला लुकाएर घर पठाएको सम्झना आज पनि आइरहन्छ। 



# हस्तेश्वरी ट्रष्टको जन्म एवं यसको उपादेयता

आमा हस्तकुमारी अत्यन्त मिलनसार नरम स्वभाव र परिश्रमको बेजोड प्रतिमूर्ति हुनुहुन्थ्यो । आमाको ममता र प्यारले हामी उहाँका सन्तानलाई असाध्यै प्रभाव पारेको छ । आमाले कहिले गाली गर्नुभएन, नराम्रो शब्द प्रयोग गर्नुभएन । आमाले पिटेको कसैलाई याद छैन । अत्यन्त ममतापूर्ण तरिकाले हामी ५ जना सन्तान आमाले हुर्काउनुभयो ।

विसं १९८० सालमा गोरखा पाँच खुवादेउरालीका नैष्टिक अम्गाई परिवारमा स्व. पण्डित भानुभक्त अम्गाई र आमा मायादेवीको जेठी सुपुत्रीको रूपमा जन्म भई गोरखा तान्द्राङ्ग निवासी स्व. लक्ष्मीदास धिताल र बल्लभाको साइला छोरा ईश्वरीप्रसाद धितालका साथ छ वर्ष कै कलिलो उमेरमा विवाह भई उहाँको जीवन यात्रा प्रारम्भ हुन्छ ।

२४ वर्षको उमेरमा विसं २००४ सालमा जेठी दिदी इन्द्रकुमारीको जन्मदेखि ३८ वर्षको उमेर २०१९ सालमा कान्छी बहिनी टुमाको जन्मसम्म हामी छ जना सन्तान उहाँको कोखबाट जन्मिसकेका हुन्छौं । आज आमाका सन्तान छोरा, छोरी, नाति-नातिना नेपालमा मात्र नभएर विश्व भूमण्डलभर छरिएर रहेका छन् । नेपाल, जापान, अमेरिका, बेलायत, विभिन्न ठाउँमा रहेका सन्तानले आमाको ममतालाई बिर्सन सकेका छैनन् । आमाले छोरा छोरीमात्र नभएर नाति-नातिनालाई पनि उही प्रकारको स्नेह दिएर प्रत्येकको हृदयमा उहाँ साक्षात लक्ष्मी झैं प्रत्येक सन्तानको मानसपटमा चेतनामा बास गरी रहनुभएको छ ।

हाम्रो गाउँ प्रकृतिले भरपुर सिंगारेको सुन्दर बस्ती हो । तान्द्राङ्गबाट देखिने हिमश्रृंखलाहरू र सुन्दर हरिया पाखाहरूले मनै लोभ्याउने त अवश्य छ, उसमा पनि तरेलि परेका खेत फाँट र पाखा बस्तीहरूमा सजिएका गाउँका घरहरूले स्वर्गको अनुभूति दिन्छ । यस्तो सुन्दर बस्तीमा हाम्रो जन्म भए तापनि शिक्षाविहीन त्यस क्षेत्रमा राज्यको शिक्षा नीतिले देशमा शिक्षाको मिर्मिरे उज्यालो झुल्कन लाग्दा नेपालका प्रथम निर्वाचित प्रधानमन्त्री स्व. विश्वेश्वरप्रसाद कोइराला २०१७ सालमा सिद्धकाली प्राविको सिलान्यास गर्न तान्द्राङ्ग तारखसे पुग्छन् । त्यही सिद्धकाली, त्यही तारखसे हाम्रो जीवनको प्रथम बिहानी भएर उदाउँदा, अनि हाम्री जेठी दिदी बिहे गर्ने भिनाजु यदुप्रसाद भट्ट, त्यो क्षेत्रको शिक्षा फाँटमा विगुल बजाउने प्रथम सचेतक बन्नुहन्छ । भिनाजु यदुप्रसाद भट्टको शिक्षाप्रतिको अनुरागले २०२४ सालमा माघेसंक्रान्तिका दिन सिद्धकाली प्राविमा दुल्लभ मिडिल स्कुलले जन्म पाउँछ - पछि यही स्कुल घ्याम्पेसालको चौतारोमा २०२६ सालमा बामे सर्दै घिर्सिन्छ । आज त्यही स्कुल दुल्लभ उच्च मावि, दुल्लभ क्याम्पसको ताज पहिरेर घ्याम्पेसालको डाँडामा ध्वजा फहराई रहेको छ ।

आज यो लेखमा आमा हस्तकुमारी, सिद्धकाली स्कुल, दुल्लभ उच्च मावि र भिनाजु यदुप्रसाद भट्टको नाम चर्चामा यो अर्थमा आउछन्- यी शब्दहरू नै हाम्रो परिवारमा हामीलाई यो ठाउँसम्म ल्याउने प्रेरक नामहरू हुन् । गाउँमा कसैले नपढ्दा पनि पढ्नमा प्रेरणा दिने आफू अहोरात्र काम गरी छोराहरूलाई पढ्नमा प्रेरणा गर्ने आमा हस्तकुमारीको प्रेरणा र भिनाजु यदुप्रसाद भट्टको शिक्षा क्षेत्रको मोहले हामी यो परिवार शिक्षित बन्न पुगेको हौं । आज आमाको







छोरा, छोरी नाति, नातिनाहरू नेपालमा डाक्टर, प्राध्यापक, वकिल, पत्रकार, इन्जिनियर, उद्योगपति, व्यापारी, शिक्षक र समाजसेवाको विभिन्न फाँट र विभिन्न विधाहरूमा देखा परेका छन् । उनीहरूको सम्पर्क र भेटको माध्यम एउटा पारिवारिक प्रेम र सद्भावलाई एकताबद्ध गरी समाज र राष्ट्रलाई नै सानो योगदान पुगोस् भनी आमा हस्तकुमारीका छोरा छोरी नाति, नातिनाहरूको संयुक्त प्रयासमा उहाँको जेठी सुपुत्री इन्द्रकुमारी भट्टको अध्यक्षतामा एउटा ट्रष्टको घोषणा गरिएको छ - यसको नाम हो हस्तेश्वरी ट्रष्ट ।

यो ट्रष्ट सानो अंकुरणमात्र हो, सुरुमा आमाका सन्तानहरूबाट सुरु गरिएको सानो रकम एक लाखबाट ट्रष्टको जन्म भएको छ । सानो अवस्थामा आमाका सन्तानहरू र नातेदारहरू यसको ट्रष्टिज हुनेछन् । यदि यसले राष्ट्रमा महत्वपूर्ण कार्य गर्न सक्यो वा यसका ट्रष्टिजहरूले यसको दायरा फराकिलो पार्दै गए भने समाजमा यसले सानो नमुना पेस गर्न सक्नेछ ।

पहिलो वर्षमा ट्रष्टले मात्र सानातिन कुरा गर्ने लक्ष्य राखेको छ -

**१-** आमा हस्तकुमारी दिवंगत हुनुभएको वि सं २०६६ साल मंसिर १४ गते भएकाले एक वर्ष भित्रमा आमाको नाममा ट्रष्ट स्थापना गर्ने,

**२-** आमाको सम्झनामा आमाको वार्षिकीमा आमाका सन्तान तथा नातेदारहरूले लेखेका साना लेख, कविताहरूको संग्रह गरी एक सानो हस्तमन्जरी पत्रिका प्रकाशन गरी आमाको वार्षिकीमा लोकार्पण गर्ने

**३-** आमा दुवै आँखा बन्द भै गाउँबाट काठमाडौं उपचार गर्न आउँदा अत्यन्त पीडा र अत्यन्त चिन्ता व्यक्त गर्नुहुन्थ्यो । त्यसैलाई मध्येनजर गरी गाउँमा अरू आमाहरूमा पनि आँखा रोगको पीडाले मर्माहत गराई रहेको हुन सक्ने भएकाले दुल्लभ उच्च माविलाई केन्द्र बनाई तिलगंगा आँखा अस्पतालको सहयोगमा हस्तकुमारी आँखा शिविर सञ्चालन गर्ने ।



यस्तै ट्रष्टले भविष्यमा समाज सेवामा सर्मपित भई सामाजिक भावनाले ओतप्रोत बनि राष्ट्रको सेवामा मातृभूमिको सेवामा सानो पसिनाको थोपा सिन्चन गर्न सकोस्- आमा हस्तकुमारीका सन्तान दर-सन्तानमा आमा र मातृभूमिप्रति र दीन दुखीहरूप्रति सधैब प्रेम जागृत होस्- पारिवारिक बिग्रह नहोस्, सबैमा सद्भाव र सद्प्रेम जागृत होस् यो सानो प्रयासबाट यो साने ट्रष्टको डोरीले सम्पूर्ण परिवारलाई एकताबद्ध गरोस् ।

आज आमा हस्तकुमारीका सन्तान नेपाल जापान, अमेरिका, बेलायतका गाउँ सहरमा छरिएर रहेका छन् । यो ट्रष्टको माध्यमबाट उनीहरूमा न्यानोपन, नजिकको अनुभूति र आमा र माटोप्रतिको अनुराग जागृत रहोस्, विश्वका जुनकुनै ठाउँमा पुगे पनि आफ्नो भाषा आफ्नो संस्कृति र आफ्नो माटोप्रति सधैं उच्च सम्मान गर्ने भावना जागृत होस् भन्ने अभिप्रायले यो सानो कामले थालनी भएको छ । भावी सन्तानको हृदयमा यसले बास जमायो र चेतना जागृत भएमा भावी दिनमा यसले आफ्नो कार्य सूक्ष्मबाट विराट नबनाउला भन्न सकिन्न ।

गत वर्ष तिहार भाइटीकाको दिन आमा हस्तकुमारी आफ्ना भाइहरू शम्भु अम्गाई र देवी अम्गाईलाई हाँस्दै टीका लगाइ रहनुभएको थियो । यो तिहारमा आमा हाम्रो सामु हुनुहन्न, गत तिहार २०६६ मा भाइटीका कै दिनमा उहाँका छोरीछोरा, नाति-नातिनाहरू र माइती भाइहरूले आमा हस्तकुमारी र बुबा ईश्वरीप्रसाद धितालको समुपस्थितिमा उहाँकै जेठो सन्तान दिदी इन्द्रकुरमारी भट्टको अध्यक्षतामा हस्तेस्वरी ट्रष्ट खोल्ने योजना गऱ्यौं । यो ट्रष्ट नै ममतामयी आमाको सम्झनामा हामी उहाँका सन्तानहरूको आमाप्रतिको सानो सद्भाव हुनेछ । आमाको सम्झनामा यो ट्रष्टले मानव पून्यको सानो काम गर्न सकोस् सबै परिवारको आमाप्रतिको श्रद्धा सम्मान यही हुनेछ । ❀

**-शारदाप्रसाद धिताल**







# अनन्त यात्रामा...



शरदप्रकाश धिताल

हजुरआमाको सम्झनामा तयार गर्न लागिएको स्मारिकाको अधिकांश लेखरचना पढें । मध्यरातको यो प्रहरमा मैले आफ्नो आँखामा आँसु रोक्न पनि सकिराखेको छैन् । अमेरिकाबाट बुबाको सम्झना होस् या बाले आफ्नो भावनामा बगेर गर्नुभएको सम्झना सबैले मलाई मेरो आँखा भिजाउन बाध्य बनाएका छन् ।

हजुरआमाले छोडेर जानुभएको एक वर्ष भयो । तर उहाँको सम्झना हरपल, हरदिन बढ्दो छ । जीवनका हर गोरेटोमा हर पाइलामा उहाँका अमृत वचन याद आइराखेका छन् । मेरी हजुरआमा तपाईं महान हुनुहुन्छ । तपाईंका ती शब्दहरूले अहिले जीवनका गोरेटोमा अघि बढ्न मलाई संजीवनीको काम गरिरहेका छन् ।

प्रत्येक दिन अक्षर र शब्दसँग खेल्ने मेरो काम नै हो । तर पनि हजुरआमाको बारेमा भन्नको लागि कुनै उपयुक्त शब्द नै पाइराखेको छैन । समाचार लेख्ने हातहरूले उहाँका बारे के नै उतार्न सकुँला र ! कुन शब्दले उहाँलाई उतार्न सक्छु र ! उहाँ त यी सबै सांसारिक कुराभन्दा धेरै माथिको स्थानमा पुगिसक्नुभएको छ । उहाँ अनन्त यात्रामा लागि सक्नुभएको छ ।

स्मृतिका पानाहरू पल्टाएर केही हरफ लेख्न खोज्दा उहाँको त्यो हँसिलो चेहरा मेरोसामु आएर बसिरहेको हुन्छ । 'बाबु ! यति रातिसम्म के गरेर बसिरहेको, सुत्नुपर्दैन !' भनेको अनुभूति हुन्छ मलाई । उहाँको गुण, अवगुणको बयान गर्न म सक्दिन । म त्यसको लायक पनि छैन । जब उहाँमा सबै गुण नै गुण देख्छु भने त्यसलाई अझ लेख्नु पर्छ जस्तो मलाई लाग्दैन ।

मेरी हजुरआमा संसारका सबैभन्दा असल मान्छेमध्येकी एक । उहाँको सरल स्वभाव र विनम्रताको एक अंशमात्र मैले धारण गर्न सकें ? आफ्नो स्वभावलाई मूल्याङ्कन गर्दै बेला-बेला सोच्ने गर्छु म ।

मैले थाहा पाउँदा उहाँको कपाल अधिकांश सेता भइसकेका थिए । कुप्रिन भने थाल्नुभएको थिएन । उहाँ ६२/६३ वर्षको हुँदादेखि राम्रोसँग चिन्न थालेको हो मैले । मेरो बाबाट पनि उहाँको बारेमा धेरै सुनेको छु । बाले आफ्नो बाबा-आमाप्रति गरेको सम्मान पनि देखेको छु मैले । तर मलाई लाग्दैन- म पनि मेरो बा, आमाप्रति त्यति नै मात्रामा सम्मान र आदर गर्न सक्छु ।

मनमा अनेक कुरा खेले पनि त्यसलाई लिपिबद्ध गर्न असमर्थ जस्तै छु म । हजुरआमासँगका सम्झनाका क्षणहरू एकैपल्ट अटेसमटेस गरेर बाहिर निस्कन खोज्छन् । अनि कुनैले पनि बाटो पाउँदैनन् । करिब २, ३ वर्षको उमेरमा कुँडोले हात पोलेपछि आँपीपल अस्पतालमा, चौतारामा हजुरबा, हजुरआमा भएको ठाउँमा लगिदेऊ भनेको हो कि जस्तो जस्तो लाग्छ । सायद पछि कसैले तैंले यसो भनेको थिइस् भनेर भनेकोले यस्तो लागेको हो कि ?

मलाई याद छ । म जन्मेको घरको माझतलामा हजुरबा र आमाको कोठा थियो । त्यहाँ भएको हजुरआमाको सन्दुक मेरो प्रिय वस्तुमध्ये एक थियो । अहिले घरमा ताला लागेको छ तर पनि त्यो सन्दुक त्यहीं छ । हजुरआमा माथि तलामा गएको बेला पछि लागेर पुगेपछि मुख गुलियो पार्दै मात्र निस्केको हुन्थें ।

छ, सात वर्षको उमेरमा हजुरआमाको अनुपस्थितिमा पनि त्यो सन्दुकको छेउमा पुग्ने गरेको हुन्थें । एक दिन सन्दुकमा गुलियो खानेकुराको खोजीमा रहेको बेलमा









मेरो हातमा पैसाका केही नयाँ नोटहरू परे। मैले आफ्नो लोभलाई रोक्न सकिन। तीन वा चार रूपैयाँ मैले निकालें पनि। त्यो पैसा हजुरआमालाई हजुरबाले वा बुबाले दिनुभएको थियो। मलाई लाग्यो उहाँलाई थाहा हुँदैन। तर केही दिनपछि उहाँले त्यहाँ भएको पैसामध्ये केही हराएको र सायद मुसाले लग्यो कि भन्नुभयो।

मलाई के गरौं, के गरौं भयो, सबैलाई मैले नै त्यहाँबाट पैसा झिकेको थाहा थियो। त्यस्तो गर्न सक्ने उमेरको मबाहेक कोही पनि थिएन नि त। हजुरआमालाई पनि थाहा थियो उहाँको सन्दुकबाट पैसा झिक्ने मैं हो भनेर तर पनि उहाँले त्यसो भन्नुभएन। मलाई चाहिं के गरौं, के गरौं भन्ने भयो त्यसपछि मैले कहिल्यै त्यस्तो गरेको याद छैन।

काठमाडौं बसाइको क्रममा धेरैपल्ट आर्यघाट पुगेको छु। तर पनि एक वर्षअघि आर्यघाट जाँदा जस्तो पीडा मलाई कहिल्यै भएन। ह्याम्स अस्पतालको प्राङ्गणमा सबैको आँखामा आँसु देखेको मैले आफ्नो सबैभन्दा प्रियमध्येको एकलाई भस्मेश्वरमा आगोको ज्वालाले लपेटिरहको देखेको थिएँ । अब मैले मेरो 'आवै' लाई कहाँ पाउने ...।

एक वर्षपछि पनि म ती पुराना दिनहरूलाई सम्झिरहेको छु। २०५१/५२ सालतिर बाको पछि लागेर हजुरआमाको साथ तिलगंगा आँखा अस्पतालतिर गएको सम्झना ताजै छ। नयाँबजारमा बस्दा मेरो निद्राबाट कायल उहाँको अनुहार याद आउँछ। कोठामा चुकुल लगाएर निदाएको मलाई उठाउन उहाँले बाहिर झ्यालबाट पानी छ्याप्नुपरेको हिजो जस्तो लाग्छ। भाइ सुदर्शन खुर्सानी लिन गएको बेला आउन ढिलो हुँदा उहाँमा देखिएको छटपटी अस्ति जस्तो लाग्छ।

पछिल्ला दिनमा उहाँको आँखाले देख्न छोडे, श्रवणशक्ति कमजोर भए तर स्मरणशक्तिमा कुनै असर परेन। आज पनि साँझ परेपछि अफिसतिर लाग्छु तर अब भोलि भेटौंला है भनेर बिदा गर्ने मेरो 'आवै' हामीसँग हुनुहुन्न। म फर्केर आउँदा उहाँ सुतिसकेको हुनुहुन्थ्यो। मेरो कामको प्रकृतिले धेरैजसो समय दिउँसो म हजुरबा र आमासँग नै रहेको हुन्थें।

मेरो कुन दिन बिदा हो र कुन दिन सँगै घर बस्छु भनेर याद गरिराख्ने हजुरआमा अब हुनुहुन्न। मलाई भन्दा उहाँलाई मेरो बिदाको दिन याद हुन्थ्यो। त्यो दिन नाती अन्यत्र नगई आफैंसँग बसिरहोस् भन्ने उहाँको चाहना हुन्थ्यो। प्रत्येक दिन आशीर्वाद दिँदै बिदा दिने उहाँको त्यस्तो बचनबिना मलाई आफ्नो काम पूर्ण सफल नभएको जस्तो लाग्छ।

दुवै आँखा देख्न छाडे पनि सकेसम्म अरूको सहारा लिन नचाहने उहाँको स्वभावले सबैलाई प्रेरणा दिएको अनुभव हुन्छ।

अफिस जाने बेला मामाघर पसेर केही दिनको लागि हजुरआमालाई ल्याइदेऊ भन्नुहुने उहाँको सम्धिनी आएपछि देखिने मुस्कान मेरो आँखामा स्पष्ट छ। दुई सम्धिनीबीचको कुराकानी र त्यसबेलाको अवस्था सम्झँदा अझैं एक्लै हाँस्न मन लाग्छ। तर मामाघर हजुरआमा सम्धिनीको यादमा टोलाइरहँदा आफूलाई पनि त्यस्तै अवस्थामा पुऱ्याउँछु।

घर हजुरआमा पूरै नदेख्ने, मामाघर हजुरआमा कम देख्ने, अनि दुवैजना कम सुन्ने। दुवै जना एउटै कोठामा बसेर कुरा गरिरहनुभएको हुन्थ्यो। तर अधिकांश समय दुवैजना बोलिरहनुहुन्थ्यो। एकले बोलेको अर्कोले सुनेको हुँदैनथ्यो तर उहाँहरूबीच सम्वाद भइरहेको हुन्थ्यो। यो अवस्थाले हामीलाई हाँसो उठ्थ्यो भने उहाँहरूलाई पनि हाम्रो हाँसोले रमाइलो क्षण महसुस हुन्थ्यो। हाम्रो हाँसोमा उहाँहरूको खुसी अडेको थियो। तर अहिले मामाघरकी हजुरआमा छोरीको घर आउँदा धेरै बस्न चाहनुहुन्न। आफ्नो दौंतरीको यादले सताउँथ्यो होला। तर उहाँको दौंतरी त हामीलाई छोडेर धेरै टाढा अर्कै दुनियाँमा पुगिसक्नुभएको छ।

आँखा नदेखे पनि नबोली नजिकै बस्दा हात र गाला छामेर पत्ता लगाउने मेरो हजुरआमा अब हुनुहुन्न। उहाँको कोमल र नरम हातको स्पर्श पनि अब त सपना भयो।

मेरो आदर्श, मेरो हजुरआमाको संझनासँगै उहाँले देखाएको बाटो र उहाँको सपना पूरा गर्न सक्यौं भने मात्र उहाँप्रति सच्चा श्रद्धाञ्जली हुनेछ। हाम्रो सम्झना र भावनामा उहाँ युगौंयुग ज्यूनु हुनेछ।









# हार्दिक श्रद्धाञ्जली

हाम्रो यस राष्ट्रिय आर्थिक सरोकार समाज, नेपाल का केन्द्रीय सदस्य एवं प्राज्ञिक समिति का संयोजक डा. जीवनाथ घिमाल की आमा स्व. हस्तकुमारी घिमालको मिति २०६६/८/१४ का दिन असामयिक निधन भएकोमा हामी स्तब्ध भएका छौं। उहाँको दिवंगत आत्माको चिरशान्तिको कामना गर्दै यस दुःखद घडिमा शोक संतप्त परिवार तथा आफन्तजन प्रति धैर्य धारण गर्ने शक्ति मिलोस भन्दै हार्दिक समवेदना व्यक्त गर्दछौं।

गंगा ब. थापा
अध्यक्ष
तथा
राष्ट्रिय आर्थिक सरोकार समाज, नेपाल (NECS)
परिवार

१२ गंगा बहादुर थापा (NECS); धनकुटा, मुगा, ph: 9841462380
१४ नन्द कुमार ढकाल (NECS); सिजुवा, मोरङ, ph: 9851113844
१५ जीवन अंगाई (NECS); गोला ; ph: 9841523362
१६ शोभा देवकोटा आमाकोसी 9721051730

हाम्रो आदरणीय ठूली आमा स्वर्गीय हस्त कुमारी घिमाल
असामयिक निधन हुन गएकोमा हामी सम्पूर्ण परीवार स्त
भएका छौं। उमेरले ८७ वर्ष भए पनि भावनाले त्यसो भ
हुँदो रहेनछ। यो दुःखद घडीमा हामी हाम्रा सकल परीवा
प्रती समवेदना प्रकट गर्दछौं। स्वर्गीय आमाको सरलता,
सिलता हामी सबैले सिक्न पर्ने लायक कुरा छन। तर पनि ह
सबैले ख्याल गर्न सकेका हुँदैनौं। हामी भौतिक रुपमा टाढ
भएर समय सहयोग पुर्याउन सकेनौ तँ दाईहरुको
दाई शारदा विशेष सहयोग विशेष नै थियो। यसको लागि
सबैले प्रसंशा गर्न लायक नै छ। जीवित छँदा धर्म गर्नु भए
प्रयाप्त छ। तर पनि परंपरालाई दाईहरुले तोड्न गा
भए जस्तो लाग्यो प्रयास गर्नु भएको भए समाजलाई नयाँ
सन्देश हुने थियो। पुरै त्याग्न न सके पनि परीमार्जन ग
दाईहरुलाई हार्दिक आग्रह गर्दछु। अन्तमा आमा स
सिक्ने कुरामा हामी प्रतिबद्ध बनौं। यही नै हाम्रो कर्तव्य
हुन छ।

१७ – छोरा कृष्ण घिमाल (विजय) — [signature] ०६६
१८ – लक्ष्मी घिमाल —









हाम्री प्रातःस्मरणीय माताको ८७ वर्षको उमेरमा अस्वाभाविक निधन भएकोले दिवङ्गत आत्माप्रति चिरशान्तिको कामना गर्दै, यस दुःखद घडीमा शोक सन्तप्त परिवारप्रति हार्दिक समवेदना प्रकट गर्दछौं।

१. बोधप्रसाद अधिकारी
२. महाशिराम ढकाल
३. विष्णु प्रसाद अर्याल
४. प्रकाश चन्द्र कँडेल
५. शारदा ढकाल (अर्याल)
६. अनिता पुडाल
७. चन्द्रज्योति सापकोटा
८. बिन्दा भट्ट
९. गीमा थापा

तथा डार्विन एकेडेमी परिवार
नयाँबजार १६, काठमाडौँ

उसले जन्माएको हुर्काएको अनि शिक्षा दिएको उहि ममतामयी आमा हस्तकुमारी घिमिरेको ८७ वर्षको उमेरमा भएको निधनप्रति शोकाकुल घडीमा स्नेही मित्र राजीव नाथ घिमिरे, मातृभिन्न स्व सम्पूर्ण परिवारजनमा हार्दिक समवेदना व्यक्त गर्दछौं। प्रकृतिको यो नियमलाइ नाघ्न नसकिने यथार्थतालाइ स्विकार गर्दै शोकलाइ सम्हाल्नुहुनेछ भन्ने कामना गर्दछौं।

चन्द्रमणि पौडेल
रामकृष्ण तिवारी

कल्पना भट्ट, नयाँबजार
सूर्य थापा, गङ्गाबु, ९८४१६३७६५३
सर्वविराग आचार्य गङ्गाबु, ९८४१३६८३६५
शिशीर भट्ट - ९८४१२५६८६८
नवराज भट्ट ९८४९२४१५४२

पवित्र मृत आत्माको चिर शान्तिको कामना गर्दछु र शोक सन्तप्त परिवार प्रति हार्दिक समवेदना सान्त्वना मिलोस भन्ने कामना गर्दछु।
नीकेत देवकोटा

हाम्री प्रातस्मरणीय फुपुको पवित्र मृत आत्माको चिर शान्तिको कामना, शोक सन्तप्त परिवार प्रति हार्दिक समवेदना, सर्वे भगवानले धैर्य धारण गर्ने शक्ति दिलाउन् भन्ने कामना गर्दछौं।
दिपक पाण्डे
हरि प्रसाद भट्ट

पवित्र मृत आत्माको चिर शान्तिको कामना गर्दछौं।
पशुपती भट्ट
विनोद भट्ट

मित्र प्रसाद लामिछाने

पवित्र मृत आत्माको चिर शान्तिको कामना गर्दै शोक सन्तप्त परिवारमा सान्त्वना मिलोस भन्ने कामना गर्दछु।
राजु बाबु श्रेष्ठ ९८५१००११२०
कुमोर-६, गोरखा

मृत आत्माको चीर शान्तिको कामना गर्दै सन्तप्त परिवारजनलाई धैर्य प्रदान होस् भन्ने कामना गर्दछौं।
बसन्त देवकोटा
भरत देवकोटा
कल्पना देवकोटा
रामचन्द्र बस्नेत
चन्द्र बस्नेत
रामचन्द्र बस्ताकोटी
श्याम कु. बस्ताकोटी







मृत आत्माको चिर शान्तीको कामना गर्दै शोक सन्तप्त परिवार प्रति हार्दिक समवेदना व्यक्त गर्दछौं।

तुलसीराज घिमिरे [signature]

मृत आत्माको चिर शान्तीको कामना गर्दै शोक सन्तप्त परिवार प्रति हार्दिक समवेदना व्यक्त गर्दछौं।

प्रविण न्यौपाने [signature]

गोविन्दराज पौडेल [signature]

१/ फणिन्द्र प्रसाद घिमिरे खरिबोट गोरखा ४३६०२६६

हाम्री प्रात स्मरणिय दिदी को दुखद निधन प्रति भावपूर्ण श्रद्धाञ्जली को साथै शोक सन्तप्त परिवार जनमा पमेश्वरले शक्ति प्रदान गरुन भनि कामना गर्दछौं।

शम्भु अधिकारी [signature]
कृष्ण कुमारी अधिकारी [signature]
दुर्गा अधिकारी [signature]
शान्ती अधिकारी
रुद्र अधिकारी

(अजय मार्ई)
गोकुर्ण अर्याल डेउराली ताल्ले काठमाडौं।

ममतामयी आमाको निधनबाट शोक सन्तप्त परिवारलाई ईश्वरले शक्ति प्रदान गरुन तथा मृत आत्माको चिर शान्तिको ~~कामना~~ कामना गर्दछु।

[signature] तमिसा
तत्वराज परिवार
तथा जि.सी.ए.

| | | | | | |
|---|---|---|---|---|---|
| १ | औलराज भट्ट | - गोरखा | मसेल - २ | - | ९८४१२०६६६४ |
| २. | बाबुराम पाण्डे | - " | " | " | - ९८४१-७४५११० |
| ३. | दिल ब. मल्लाकोटी | - | काठमाडौं | बानेश्वर -5 | - ९८४१२३६३२१ |
| ४। | जानकी घिमिरे | | गोरखा | (देउराली) | ०६५-९८५१६८८६८८ |
| ५। | लक्ष्मी [illegible] | | | | |

अनन्यतम मित्रवर होमनाथ घिमिरे, जीवनाथ घिमिरे र शारदा प्रसाद घिमिरेज्यूकी ममता मयी माता एवं आदरणीय मित्र पिताज्यूकी सहधर्मिणी तथा घिमिरे कुलकी धरोहर हस्त कुमारी घिमिरेज्यूको असामयिक निधन भई स्वर्गारोहण भएकोले म अत्यन्त मर्माहत भएको छु। पारिवारिक विपत्तिको यस घडीमा शोकाकुल परिवारजन प्रति हार्दिक समवेदना व्यक्त गर्दै ईश्वरले उहाँहरुमा धैर्यधारण गर्ने क्षमता प्रदान गरुन भन्ने प्रार्थना गर्दछु। साथै, दिवंगत आत्माको चिरशान्तिको कामना गर्दै मित्रमाता प्रति अगाध श्रद्धा व्यक्त गर्दछु।

श्रीधर नेपाल
'पाल्पाली मित्र'
हाल धापासी -८ काठमाडौं
२०६६।८।२२







"आयो टप्प टिप्यो लग्यो कति, पुग्यो पारे र टर्दैन त्यो"।
यस्तै हो यो जिवनको प्रकृया, हामी सबै परिवार
जारुखेद्दा सबैलाई ईश्वरले धैर्य धारण गर्ने शक्ति प्रदान
गरुन।

भवनाथ भट्ट 9841322841 त्यागल

मृत आत्माको चिरशान्तीको कामना गर्दै शोक
सन्तप्त परीवार प्रति हार्दिक समवेदना व्यक्त
गर्दछौं
कृष्ण प्रसाद बस्ती 9841319790
सुशीला बस्ती 9841920025
उत्तम राज भट्ट 9841578331

ओम ब. रायमाझी न्यानोटेक्नोलोजी काठमाडौं 9819925066
प्रदिप चापागाई न्यानोटेक्नोलोजी काठमाडौं 9849094[illegible]
राम प्रसाद मिश्र न्यानोटेक्नोलोजी काठमाडौं 9802666934

मृत आत्मा चिरशान्तीको कामना गर्दै शोक सन्तप्त परिवार
प्रति हार्दिक समवेदना व्यक्त गर्दछौं
सुदिप भट्ट तथा सम्पूर्ण
छपाईका भट्टहरु

हाम्रो प्यारी आमा प्रति मनका उद्गारले हार्दिक
श्रद्धाञ्जली व्यक्त गर्दछौं।
सुरक्षा सार्थिहरु
गणेश शिवाकोटी हार्डिक हार्ट कोर्टेशन
सुमन पराजुली "
दिनेश बगाले
यदुनाथ अर्याल।

मृतआत्माको चिरशान्ति र शोक-सन्तप्त परिवारजनमा
हार्दिक समवेदना - राजेन्द्र । सीता फुयाल

अती सन्त, सितल, मिलनसार र सहनशील ममतामयी आमा हस्तकुमारीको यहि २०६६।८।१४ गते देहावसान भएकोमा हामी मर्माहत भएका छौं। यस दुःखको घडीमा समस्त परिवार, नाता कुटुम्ब तथा इष्टमित्रमा ईश्वरले धैर्य धारण गर्ने शक्ति प्रदान गरुन। उहाँको वैकुण्ठमा वास रहोस भन्ने कामना गर्दछौं।

सुदिप भट्ट तथा परिवार
कोटेश्वर + कपिल भट्ट





सीताराम देवकोटा
मोबाइल: ९८०३२२४४९६ अफिस ४३१०३४९

२०६६-४-२३
इश्वर प्रसाद चौपाने 9851084375
नवराज अर्याल 985060123
दिप बहादुर अधिकारी 9841676090
सोमनाथ ढकाल 9841865136
} ज्ञानोदिनी क्याम्पस

मेरा अत्यन्त घनिष्ठ र आदरणीय मित्रहरू डा. जीवनाथ धिताल र शारदा धितालकी ममतामयी माताको स्वर्गारोहणको खबरले म अत्यन्त शोकमग्न हुन पुगें। यस्तो अवस्थामा धैर्य धारण गर्न र मृत्युलाई जीवनको अत्यन्त प्राकृतिक र अभिन्न प्रक्रियाको रुपमा लिएर आफ्नो पिंढीको कर्तव्य निर्वाह गर्न म मेरा आदरणीय मित्रहरू लगायत सबै परिवारका सदस्यहरूलाई अनुरोध गर्दै मृत आत्माको चीर शान्तिको कामना गर्दछु।

राजन प्रसाद पोखरेल
पाटन संयुक्त क्याम्पस

दिवंगत आत्माको चिरशान्तीको कामना।

तिलक के.सी.
डार्विन एकेडेमी
9841262030

दिवंगत आत्माको चीर शान्तिको कामना गर्दै शोक संतप्त परिवारप्रति धैर्यधारण गर्ने शक्ति मिलोस्।

शान्ति गुरुङ
डार्विन एकेडेमी
9851107130





ॐ

" आदर्शको प्राप्ति समर्पणको पूर्णतामा निर्भर हुन्छ"

"हार्दिक श्रद्धाञ्जली एवं समवेदना"

दुःखको एक क्षण पनि निकै लामो समय जस्तो हुन्छ ।

(जन्म वि.सं. १९७९। । स्व. २०६६।८।१४।१)

नजायते म्रियतेवा कदाचिन्नायं भुत्वा भविता वा न भूयः ।
अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे ॥

अर्थात

आत्माका लागि न कहिल्यै जन्म छ न मृत्यु । अत्मा कहिल्यै जन्मिदैन र जन्मिने छैन । ऊ त अजन्म छ, नित्य छ, शाश्वत छ र पुरातन छ । शरीर मर्दा पनि ऊ मर्दैन ।

गोर्खा निवासी हाम्रा आदरणीय सम्बन्धी श्रध्येय श्री ईश्वरी प्रसाद धितालकी धर्मपत्नी हाम्रा सहृदयी होमनाथ धिताल, जिवनाथ धिताल, शारदा प्रसाद धिताल, ईन्दीरा कुमारी भट्ट, शोमा वस्तीकी परमपुजनीय माता एवं हाम्री कूलकी वंशाधार प्रातस्मरणीय, मृदुभाषी, हृदयीस्पर्षी एवं आस्थाकी प्रदिपिका स्व. हस्त कुमारी धितालको वि.सं. २०६६ साल मंसिर १४ गते आईतवार द्वितिया तिथीका दिन अपरान्ह १:३० वजे ८७ वर्षको उमेरमा परमेश्वरमा लिन हुनु भएको तेहृौं पुण्य तिथीमा दिवंगत आत्माको चिरशान्तिका लागि भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दै यस दुःखद घडिमा परमेश्वरले शोकसन्तप्त परिवार जनमा धैर्यधारण गर्ने शक्ति प्रदान गरुन भन्ने प्रर्थनाका साथ हार्दिक श्रध्दान्जली अर्पण गर्दै समवेदना प्रकट गर्दछौं ।

भट्ट पारिवारिक विकास कोष
वि.सं. २०६६ मंसिर २६ गते रोज ६
दसमी तिथी

संरक्षक | सल्लाहकार | आर्थिक समिति सयोजक | महासचिव | कोषाध्यक्ष | प्रधान सेवक

---

# गोरखा-काठमाडौं गणतान्त्रिक सम्पर्क मञ्च

**(Gorkha-Kathmandu Republican Co-ordination For m)**



पत्र संख्याः

च. नं.:

मितिः २०६६।०८।२६

## समवेदना-पत्र

गोरखा जिल्ला तान्द्राङ गा.वि.स वडा नं. ९ काउले जन्मघर भई हाल भक्तपुर पेप्सीकोलामा वस्दै आउनुभएका यस गोरखा-काठमाडौं गणतान्त्रिक सम्पर्क मञ्चका सल्लाहकार प्राध्यापक एंव वुद्धिजीवि शारदा प्रसाद धिताल एंव प्रगतिशिल वुद्धिजीवि डा. जीवनाथ धितालको ममतामयी आमा हस्तकुमारी धितालको देहावसानको समाचारले हामीलाई दुखित वनाएको छ । यस घडीमा मृतआत्माको चीरशान्तीको कामना सहित प्राध्यापक द्वय लगायत शोक सन्तप्त सम्पुर्ण परिवारजनमा हार्दिक समवेदना व्यक्त गर्दछौ ।

दुर्गा पोखरेल
अध्यक्ष
एंव
गोरखा-काठमाडौं गणतान्त्रिक सम्पर्क मञ्च परिवार

---



# राष्ट्रिय आर्थिक सरोकार समाज नेपाल

**National Economic Concern Society (NECS), Nepal**

प.सं.
च.नं.: १६१/०६६

मितिः २०६६।८।१७

## हार्दिक समवेदना

यस राष्ट्रिय आर्थिक सरोकार समाज, नेपाल का केन्द्रीय सदस्य एवं प्राज्ञिक समितिका संयोजक डा. जीवनाथ धिताल की आमा स्व. हस्तकुमारी धितालको मिति २०६६।८।१४ का दिन असामयिक निधन भएकोमा हामी स्तब्ध भएका छौं। वहाँको दिवंगत आत्माको चीरशान्तिको कामना गर्दै यस दुःखद घडिमा शोक सन्तप्त परिवार तथा आफन्तजन प्रति धैर्य धारण गर्ने शक्ति मिलोस भन्दै हार्दिक समवेदना व्यक्त गर्दछौं।

गंगा बहादुर थापा
अध्यक्ष
तथा
राष्ट्रिय आर्थिक सरोकार समाज परिवार
नेपाल

---

**यो प्रकाशन हाम्री ममतामयी हस्तकुमारी धितालको वार्षिक पुण्यतिथिको अवसरमा उहाँलाई सम्झने एक प्रयास मात्र हो ।**

**उहाँको सम्झना सबैमा अमर र अजर रहने छ । उहाँसँगका स्मृतिका क्षणलाई लिपिबद्ध गर्ने प्रयास हो यो ।**

**यसमा प्रत्यक्ष र परोक्षरूपमा सहयोग गर्ने सबै धन्यवादको पात्र हुनुहुन्छ । कम्प्युटर सेटिङ गरी सहयोग गर्ने भक्त कार्की, शुद्धाशुद्धि हेरी सहयोग गर्ने नन्दलाल अम्गाई र परशुराम रेग्मीलाई धन्यवाद दिन चाहन्छौं ।**

**यस प्रकाशनका लागि सहयोग गर्नुहुने सबैमा हार्दिक आभार ।**

***हस्तेश्वरी ट्रस्ट***
***काठमाडौं***

# हार्दिक श्रद्धाञ्जली



जन्म
वि.सं. १९८१ वैशाख

स्वर्गारोहण
वि.सं. २०६६ मंसिर १४





स्व. हस्तकुमारी धिताल

**हाम्री प्रातः स्मरणीय ममतामयी हस्तकुमारी धितालको**
**स्वर्गारोहण भएको प्रथम वार्षिक पुण्यतिथिमा**
**दिवंगत आत्माको चीर शान्तिको कामना**
**गर्दै हार्दिक श्रद्धाञ्जली**
**अर्पण गर्दछौं।**

ईश्वरीप्रसाद धिताल

इन्द्रकुमारी धिताल, होमनाथ धिताल, जीवनाथ धिताल, यदुप्रसाद भट्ट, शारदाप्रसाद धिताल, सोमा वस्ती, चन्द्रकुमारी धिताल, मधु धिताल, शिशीरकुमार भट्ट, विमला भट्ट उपाध्याय, भवन भट्ट, भरतप्रसाद बस्ती, सुलोचना धिताल, सविना भट्ट, राधिका धिताल, जितेन्द्र धिताल, अनिता भट्ट अधिकारी, सिर्जना धिताल, शरदप्रकाश धिताल, उज्जल भट्ट, सुचना धिताल, सुदर्शन धिताल, सन्तोष धिताल, प्रशान्त वस्ती, सितल धिताल, सिद्धार्थ धिताल, प्रज्वल वस्ती, अनुस्का भट्ट, शिश्यान भट्ट, सुदीप अधिकारी, एलिना भट्ट, प्रमेश उपाध्याय, शुभ अधिकारी, युलिन भट्ट, इरभान उपाध्याय, प्रविण भट्ट

तथा

**हस्तेश्वरी ट्रस्ट परिवार**